# अष्टाबक्रगीता

(मौलिक श्लोकहरू, नेपालीमा भावानुवाद र व्याख्यासहित)




देवीप्रसाद प्रसाई

२०७४

अष्टाबक्रगीता
देवीप्रसाद प्रसाई

9789937-0-3370-1

# अष्टावक्रगीता

# (Astavakra Gita)

(मौलिक श्लोकहरु, नेपालीमा भावानुवाद र व्याख्यासहित)

देवीप्रसाद प्रसाई

२०७४

अष्टावक्रगीताः मौलिक श्लोकहरु, नेपालीमा भावानुवाद र व्याख्यासहित

पहिलो संस्करण, १००० प्रति



**प्रकाशक**
देवीप्रसाद प्रसाई
महालक्ष्मी २, ललितपुर
फोनः ५२०२०५७
इमेलः deviprasai@yahoo.com (सुझाव र प्रतिक्रयाका लागि)

**मुद्रणः** बागबजार छापाखाना, काठमाण्डौ
फोनः ४२२२१७४, ४२५३५३१
इमेलः bc@mail.com.np

**मूल्यः** अमूल्य (दान स्वरुप)

ISBN: 9789937-0-3370-1

# भूमिका

म सानो हुँदा सुनेको थिए कृष्ण र अर्जुन बीचको संवाद गीता हो र  जनक अष्टावक्र सम्वाद चाँहि महागीता । मैले त्यसैवेला अष्टावक्रगीता किन्न खोजे तर पाइन । त्यसो त अहिले पनि कतै कतै मात्र पाइन्छ । भगवतगीता चाँहि जही तही पाइन्छ । किन अष्टावक्रगीताले त्यति प्रशिद्धता कमाउन सकेन ? मेरो मनमा खुलदुली लागि रहन्थ्यो । हुन त भगवतगीता र अष्टावक्रगीता दुवै क्लिष्ट छन् । दुवैमा दार्शनिकता बढी छ । तर अध्ययनकै क्रममा मैले अनुभव गरे अष्टावक्रगीता बुझ्न कठीन तर बुझे पछि दर्शन चाँहि सोझो छ । भगवतगीता चाँहि बढी क्लिष्ट, कवितात्मक र दार्शनिक छ । क्लिष्टता र बढी दार्शनिकता भए पछि व्याख्याता पनि चाहियो । त्यसैले पण्डितहरुले कृष्णका साथ साथै आफ्ना पनि धेरै कुरा घुसाउन सक्ने भए । धेरै खेल्ने ठाउँ पनि पाए । आ–आफ्नो सम्प्रदाय पनि बनाउन पनि सक्ने भए । क्लिष्टता भएपछि, नबुझे पछि, पढ्न र साधना गर्ने कुरै भएन । जब मैले अष्टावक्रगीतालाई बढी मन्थन गरी गहिरिएर अर्थ खोज्न लागे तब मलाई थाहा भयो, अष्टावक्रगीता ज्ञानको मुहान रहेछ । उपनिषदको पनि उपनिषद रहेछ अष्टावक्रगीता । त्यस्तो अमृतलाई सर्वसाधरणले बुझ्न सक्ने हिसावले व्याख्या र विश्लेषण गरी ज्ञानलाई विद्धवान पाठकहरु समक्ष पस्कनु पनि आफैमा अकर्म नै हो ।

शब्दार्थ र लक्षणार्थका हिसाबले मात्र यसको व्याख्या र विश्लेषण गरियो भने त्यो अमृतमय गत्थ माथि घोर अन्याय हुनजान्छ । यसलाई परिवेश, भाव र आत्मतत्वको आधारमा बुझ्नु र व्याख्या गर्नु जरुरी छ ।

मसंग सीमित अध्यात्मिक ज्ञान छ, तसर्थ मेरो अथक प्रयासका वावजूद पनि यसमा भाषागत, भावगत, र व्याख्यागत त्रुटिहरु रहन सक्छन् त्यसका लागि विद्वान पाठकवर्ग समक्ष म क्षमाप्रार्थी हुदै यहाहरुबाट प्राप्त हुने  रचनात्मक सल्लाह र सुझावलाई यथासम्भव ग्रहण गरी आगामी संस्करणमा सुधार गर्दै लैजान्छु भन्ने प्रतिबद्धता व्यक्त गर्दछु । पुस्तक सम्पादनका लागि भाइ राजेन्द्र प्रसाईलाई धेरै धेरै धन्यवाद ।

देवी प्रसाद प्रसाई, अक्षय तृतीया, २०७४

# विषयसूची

# अष्टवक्रको परिचय

१. एकरात अष्टाबक्र राजा जनकलाई भेटन र उनीद्धारा आयोजित शास्त्रार्थमा भाग लिन जनकको दरबारमा आउनुभएको थियो । उनको विकलाङ्ग शरीर देखेर दरबार सुरक्षामा रहेका पाले, प्रहरी छक्क परे । उनको अष्टाबक्र शरीर देखेर प्रहरीले उनलाई दरबारभित्र जान दिदैनन् । उनले भने "मानिसको रुप र उमेरको आधारमा मूल्यांकन गर्नुहुदैन । म आएको कुरा राजालाई खबर गर ।" प्रहरीले राजालाई खबर गरे । राजा जनकबाट अष्टाबक्रलाई भित्र पठाउने आदेश हुन्छ । अष्टाबक्रले राजालाई भने म "बन्दीको ज्ञानलाई चुनौति दिन चाहन्छु ।" बाह्र तेह्र बर्षको विकलाङ्ग केटाको कुरा सुनेर राजा छक्क परे । उनले अष्टाबक्रलाई केही प्रश्न सोधे । उनले फटाफट उत्तर दिए । अष्टाबक्रको ज्ञानबाट राजा जनक निकै प्रभावित भए । उनले बन्दीसंग शास्त्रार्थ गर्ने समय मिलाइ दिए । दिइएको समयमा अष्टाबक्र सभाहलमा प्रवेश गर्नासाथ उनको आठ ठाउँ बाँङ्गिएको शरीर देखेर आचार्य बन्दी लगायत सबै सहभागीहरु जोडले हाँस्न थाले । अष्टाबक्रले भने "राजा म त विद्धानको सभामा आँए भनेको त चमारको सभामा पो आएछु ।" अष्टाबक्रले भने चमारले मात्र छाला हेरेर मूल्यांकन गर्छन । उनको उत्तरले पूरै सभाहल चकमन्न भयो । विद्धवानहरुको सभालाई चमारको सभाको संज्ञा दिएको कथा यद्दपि सर्वाधिक लोकप्रिय छ ।

२. राजा जनकको राज्यमा विदेशी सेनाबाट आक्रमण भई आफ्ना धेरै सेनाहरु मारिन्छन् । उनी राजदरवार छोडेर भाग्छन तर पनि उनलाई विदेशी सेनाले लखेटदै जान्छन र अन्त्यमा विदेशी सेनाले उनलाई पकिएर त्यहाँका राजा समक्ष पेश गर्छन् । त्यो राजा अलिक दयालु रहेछ । उसले मध्यरात भित्र भागेर अर्कै राज्यमा शरण लिन जान सक्छस भने जा भन्ने आदेश दिन्छ । राजा भोकै तिर्खै भाग्दै भाग्दै पसिनै पसिना भएर मध्यरातमा त्यो राज्य काटेर अर्को राज्यको एउटा परोपकारी संस्थामा पुग्छन् । त्यहाँ उनको आफ्नो भन्ने कोही हुदैन । असाध्य भोक लाग्छ, त्यहाँका मानिससंग खाना माग्नुहुन्छ, तर खाना सकिएको जानकारी प्राप्त हुन्छ । आफै भाँडामा टाँसिएका सीताहरु बटुलेर एउटा सानो डल्लो बनाई मुखमा हाल्न मात्र के लागेका थिए, त्यो पनि दुईटा कुकुरले थुतेर खाइदिन्छन् । राजा दुःखित भएर

रुन्छन् । झसङ्ग भएर उठ्दा उनी फेरि आफ्नै राजमहल मै हुन्छन् । त्यहाँ फेरि पहिला जस्तै दरबारमा सजाइएको विछ्यौना, महारानी, सुसारे सभामा रहेका कर्मचारी, द्वारे, पाले आदि । उनी छक्क पर्छन् । सत्य कुन हो दरबारमा आरामपूर्वक राजा भएर बसेको सत्य हो कि भगौडा राजा भएर खाना खान नपाएर लुकेर बसेको सत्य हो ? त्यसकारण विद्वानहरुलाई बोलाउनु हुन्छ र सोध्नु हुन्छ । राजा जनकले यसै क्रममा अष्टावक्रलाई पनि सोध्नु भयो सत्य कुन हो जागृत सत्य कि स्वप्न सत्य हो ? राजदरवारमा रहेको सत्य हो कि, भगौडा भएर लुकेर बसेको सत्य हो ? अष्टवक्रले भन्नुभयो न त राजदरवारमा रहनु भएको सत्य हो, न त भगौडा भएर लुकेको नै सत्य हो । न दरबारको सुख सत्य हो न भगौडा हुदाँको पीडा किनकि यी सबै परिवर्तन भइरहन्छन् । सत्य त तपाई भित्रको आत्मतत्व हो जो शास्वत छ र अपरिवर्तनीय छ, त्यो मात्र सत्य हो । अष्टावक्र भन्ने वित्तिकै धेरैका मनमा जागृत सत्य कि स्वप्न सत्य हो ? भन्ने राजा जनकको प्रश्नमा अष्टावक्रले दिएको उत्तर याद आउँछ ।

३. राजाबाट छोटो समयमा (घोडा चढन जति समय लाग्छ, त्यति समय भित्र)आत्मज्ञान दिने पण्डितलाई सुनले सिङ्ग मोहरेका १००० गाई पुरस्कार दिने धोषणा हुन्छ । त्यो कुरा आफ्ना बुबाबाट सुनेपछि अष्टावक्रले अति छोटो समयभित्र म आत्मज्ञान दिन सक्छु भनी राजपुरोहित मार्फत राजामा जाहेर गर्नुहुन्छ । त्यसपछि अर्को दिन विहानै अष्टावक्र र श्वेतकेतु राजा जनकको दरबारमा पुग्छन् । उनले अति छोटो समयमा (घोडा चढने समय भित्र) आत्माज्ञान दिन सक्नुहुन्छ ? भनी राजा जनकद्वारा अष्टावक्रलाई सोधनी हुँदा “सक्छु महाराज” भनी प्रतिउत्तर दिनुभयो। उहाँले घोडा तयारी गर्न लगाउनु भयो । जब राजाले एउटा खुट्टा भुईमा राखेर अर्को खुट्टा घोडामाथि राख्नु भयो, महाज्ञानी अष्टावक्रले भन्नुभयो “हे राजन अहङ्कार छोड्नु होस् र आफ्नो मनलाई मुट्ठी भित्र राख्नु होस्” उत्तर सुनेर राजा जनकलाई चक्कर लाग्यो । आफ्नो मनलाई मुट्ठीभित्र कसरी राख्ने र अहङ्कार कसरी छोडने ।

अष्टावक्र भन्ने बित्तिकै हामी माथिका तीन प्रसंङ्गहरु संझन्छौ । पहिला दुई उदाहरणहरु सत्य (साध्य) बुझाउन पर्याप्त छन् भने तेस्रो चाँहि सत्य प्राप्त गर्ने साधन बुझाउन । अष्टावक्रको विषयमा यी र यस्ता धेरै कथाहरु छन् जहाँ शरीर र आत्मा बीच फरक देखाइएको छ, सत्य कुरा

बताइएको छ र  सत्य प्राप्त गर्ने बाटो बताइएको छ । राजा जनकको राज्यमा धेरै विद्वान, ऋषि, महर्षि र पण्डितहरु थिए । तीनै विद्वानहरु मध्ये एक जना कहोड नाम गरेका वेदान्त दर्शनका ज्ञाता पण्डित पनि उनको राज्यमा थिए । महर्षि  उद्दालक पनि उनकै राज्यमा थिए । पण्डित कहोड महर्षि उद्दालकका शिष्य र ज्वाई थिए । कहोड नियमित रुपमा शास्त्रार्थमा भाग लिन्थे र प्रायशः अब्बल हुन पुग्थे । उनी सधै जसो वेदकै अध्ययन र व्याख्यामा समय ब्यतीत गर्दथे । कहोडकी श्रीमती सुजाता घर व्यवहार र पतिको सेवा गर्थिन् । सधै झै सुजाता गर्भिणी भएको अवस्थामा पनि पण्डित कहोड वेदहरुको पाठ र त्यसको व्याख्या गर्दथे । सुजाताको गर्भमा रहेका बालकले त्यो वेद र वेदान्त राम्ररी सुन्दथे । कति उनलाई ठीकै लाग्थ्यो कति चाँहि वहियात । एक दिन कहोड वेदको पाठ गरिरहेका थिए । अचानक सुजाताको पेट भित्रैबाट एउटा आवाज आयो "उच्चारण र ब्याख्यामा तोडमोड भयो ।" पण्डित कहोडमा वेदान्तज्ञाता हुँ भन्ने आडम्बर थियो । म महर्षि  उद्दालकको शिष्य, उत्कृष्टता सहित दीक्षान्त भएको, मेरो उच्चारणमा तोडमोड भयो भन्ने यो को हो? त्यो आवाज सुनेपछि पण्डित कहोडलाई अति पिडा भयो जसलाई उनी शुद्ध उच्चारण ठान्थे र त्यहि अनुसार व्याख्या गर्दथे त्यसैलाई अशुद्ध उच्चारण र तोडमोडपूर्ण ब्याख्या भने पछि उनमा क्रोधको सीमा नाध्यो?  उनलाई ज्यादै रिस उठ्यो र उनले "विकलाङ्ग" होस् भनी श्राप दिए । आफ्नै बाबुको श्रापका कारण जन्मदै आठ ठाउँ बाङ्गिएकाले त्यो बच्चाको नाम अष्टावक्र रहन  गयो ।

बाबुको श्रापका कारण अष्टावक्र भएर जन्मनु परेकोमा उनलाई कति पनि दुख थिएन कारण उनको शरीर र उनी भित्रको "म" फरक कुरा हुन् भन्ने उनलाई सानैमा थाहा थियो । अष्टावक्र भनेको आठ ठाउँ बाङ्गिएको शरीर होइन न त भौतिक रुपमा कहोड र सुजाताको पुत्र नै हुन् । अष्टावक्र भनेको त्यस्तो ब्यक्ति हो जो संग ज्ञानको झरना निरन्तर बगाई राख्ने आत्मज्ञानको अथाह तलाऊ छ, सत्यता छ, बैराग्यता छ, दया छ र सरलता छ त्यही ब्यक्तिको नाम हो अष्टावक्र । अझ छोटकरीमा भन्ने हो भने जो संग आत्मज्ञान छ, त्यही ब्यक्तिको नाम हो अष्टावक्र । मानिस मध्ये जसले आत्मा र शरीर फरक देख्छ, जो जो संग आत्मज्ञान छ ती सबै अष्टावक्र नै हुन् । धेरै मानिसहरु मानव जन्म लिए पछि साधनाद्वारा प्रज्ञा प्राप्त गर्छन । बुद्धले जन्म लिए पछि साधना गर्नुभयो त्यही साधनाबाट प्रज्ञा प्राप्त भयो र त्यही प्रज्ञाद्वारा परिनिर्वाण प्राप्त गर्नुभयो । यसको ठीक विपरीत

अष्टावक्रले सुजाताका गर्भ मै रहँदा साधना गर्नुभयो र जन्मनु भन्दा अगाडि नै प्रज्ञा प्राप्त गर्नुभयो । बुद्धले शील पालन गर्नुभयो, समाधिमा बस्नुभयो, त्यही पछि गहिरो समाधिमा रहनुभयो र प्रज्ञा प्राप्त गर्नुभयो तर अष्टावक्र चाँहि एकैचोटि गहिरो समाधिमा बस्नुभयो र प्रज्ञा प्राप्त गर्नुभयो । उनी कर्म बन्धनमा बाँधिनु परेन त्यसैले मोक्ष पनि हुनुपरेन । उनी गर्भमा रहदा देखि नै बन्धनमा बाँधिनु भएन । सधै जन्म, मृत्यु, सुख, दुःख आदिबाट पूर्णतः तटस्थ रहनु भयो । केवल यी प्रक्रियाको साक्षी मात्र बन्नु भयो न त भोक्ता हुनुभयो न त कर्ता नै केवल प्रतिक्रियारहित द्रष्टा मात्र । त्यसैले उनलाई मुक्ति जरुरत नै परेन ।

राजा जनकको दरबारमा विद्वानहरुको कदर हुन्थ्यो । नियमित शास्त्रार्थ सभा, सम्मेलन र सेमिनारहरु भइरहन्थे । त्यही श्वेतकेतु र अष्टावक्र पनि नियमित सम्वाद र छलफलमा भाग लिनु हुन्थ्यो । माथि बताइए अनुसार राजाबाट एक दिन थोरै समयमा (घोडा चढन जति समय लाग्छ, त्यति समय भित्र)आत्मज्ञान दिने पण्डितलाई सुनले सिंग मोहरेका १००० गाई पुरस्कार दिने धोषणा हुन्छ । तर लोभका कारण आत्मज्ञान दिन सक्छु भन्ने तर दिन नसक्नेलाई व्यक्तिलाई कारागारमा बन्दी बनाउने राजाबाट आदेश हुन्छ । आत्मज्ञान दिने नसक्ने ब्राहमणहरु पनि पुरस्कारको लोभमा परी आत्मज्ञान दिनसक्छु भन्दाको परिणाम धेरै ब्राहमणहरु कारागारमा बन्दी हुन पुगे । नियमित शास्त्रार्थमा ब्राहमणहरु कैदी छन् भन्ने थाहा पाएपछि महाज्ञानी अष्टावक्रले सोध्नु हुन्छ किन ती  ब्राहमणहरु कैदी हुन पुगे ? आफ्ना पिता कहोडले बन्दी हुनाको कारण सविस्तार भन्नुभयो । अति छोटो समयमा आत्मज्ञान दिने व्यक्तिलाई राजा जनकले धेरै धन सम्पत्ति र पुरस्कार दिइने घोषणा गरेका थिए । धेरै ब्राहमणहरुले धन सम्पत्तिको लोभमा परेर “म अल्प समयमै आत्मज्ञान दिन सक्छु” भनेर राजा जनककहाँ जाहेर गरे । तर कसैले पनि त्यति समय भित्र आत्मज्ञान दिन सकेनन्, तसर्थ उनीहरुले बन्दी जीवन विताई रहेकाछन् । त्यो कुरा सुने पछि अष्टाबक्रले अति छोटो समय भित्र म आत्मज्ञान दिन सक्छु भनेर राजपुरोहितमा जाहेर गर्नुहुन्छ । त्यसपछि त्यो खबर राजा जनक कहाँ पुग्छ । अष्टावक्रको यो साहस देखेर उनका पिता कहोड खुसी हुन्छन् । अष्टावक्र पाहुना घरमा अत्यन्त थोरै खाना खाएर राजा जनकको निमन्त्रणा पर्खेर बस्नुहुन्छ । उनी आरामदायी विछ्यौनामा नसुती भुई मै सुत्नुहुन्छ । नाचगानको निम्तो आउँछ तर अष्टावक्र जानु भएन । ज्ञान आर्जन र

प्रवर्धनका लागि नाचगान, बजान, विलासीपूर्ण विछ्यौना वाधक हुन्छ तसर्थ उनी नाचगानमा जानु भएन । विलासीपूर्ण विछ्यौनामा सुत्नु भएन । असत्य बोल्नु भएन । बुद्धले पनि यिनै शीलहरु पालन गर्नुभयो र प्रज्ञा प्राप्त गर्नुभयो । त्यसैले चित्त बृति निरोध गर्नका लागि शील पालन अनिवार्य छ । चाहे त्यो त्रेता युगमा होस्, चाहे द्वापर र कलियुगमा नै किन नहोस् शील पालन गर्नु पर्छ ।

त्यसपछि अर्को दिन विहानै अष्टावक्र र श्वेतकेतु राजा जनकको दरबारमा पुग्छन् । उनले अति छोटो समयमा (घोडा चढने समय भित्र) आत्माज्ञान दिन सक्नु हुन्छ ? भनी राजा जनकद्वारा अष्टावक्रलाई सोधनी हुँदा सक्छु महाराज भनी प्रतिउत्तर दिनुभयो । वहाँले घोडा तयारी गर्न लगाउनु भयो । वहाँले भन्नुभयो म सँग समय छैन । छिटै घोडा तयारी गर्नुहोस् भनी पुनः विन्ती गर्नुभयो ।

जब राजाले एउटा खुट्टा भुईमा राखेर अर्को खुट्टा घोडामाथि राख्नु भयो । महाज्ञानी अष्टावक्रले भन्नुभयो "हे राजन ! अहङ्कार छोड्नु होस् र आफ्नो मनलाई मुट्ठी भित्र राख्नु होस्" उत्तर सुनेर राजा जनकलाई चक्कर लाग्यो कसरी अहङ्कार छोड्ने र मनलाई कसरी मुट्ठी भित्र राख्ने ? त्यसपछि अष्टावक्रले हाँस्दै भन्नुहुन्छ । ज्ञान प्राप्तिको लागि असल पात्र बन्न जरुरी छ तसर्थ अहङ्कारलाई छोड्नु पर्छ । जबसम्म अहङ्कार हुन्छ तबसम्म मनलाई नियन्त्रण गर्न सकिदैन । अहङ्कार ले ज्ञानलाई छोपेर राख्छ । अहङ्कार ले ज्ञानलाई अडिन दिदैन । जति नै पानी परे पनि पहाडका टाकुरामा पानी रहदैन । एकै क्षणमा पानी बगेर जान्छ । त्यस्तै अहङ्कारी व्यक्तिलाई जति नै ज्ञानको वर्षा भए पनि त्यो अडिदैन, बगेर जान्छ । हे राजन ! हजुरले सुनले सिंग मोहरेका १००० गाई पुरस्कार दिने धोषणा गर्नु भएको छ, त्यो अहङ्कार हो । ब्राह्मणहरुलाई कारागार थुनी राख्नु भएको छ, त्यो पनि अहङ्कार ले नै हो । अष्टावक्रको त्यो भनाईबाट राजा जनक झसँग हुनुभयो । तत्काल ती ब्राह्मणहरुलाई कारागारबाट छुटकारा दिन राजी हुनुभयो । यसबाट राजा जनकले अष्टावक्रप्रति आभार प्रकट गर्नुभयो।

यो 'अहङ्कार छोड्नु'लाई दुई अर्थमा बुझ्नु पर्छ । आफ्नो मन सफा गर्न मन भित्र जरा गाडेर रहेको आडम्बरलाई जरैबाट उखेलेर फाली दिनु पर्छ भन्ने अर्को अहङ्कार फालियो भने आफ्नो मात्र नभई अरु मानवको पनि कल्याण हुन्छ । कारागारबाट मुक्त गर्नु भनेको मानिसहरुलाई

कर्मबन्धनबाट मुक्त गर्नु हो, लोभ, मोह, द्वेष, क्रोध, अहङ्कारको कारागारबाट मुक्त गर्नु हो । आफू मात्र मुक्त हुने होइन कर्मबन्धनमा रहेका अरु व्यक्तिलाई पनि मुक्त गर्न सहयोग गर्नु पर्छ । महाज्ञानी अष्टावले एउटै औषधिले दुई रोग निको पार्नु भयो । एउटा राजा जनक, आचार्य बन्दी र अरु पण्डितभित्रको अहङ्कार  भष्म पारी दिनुभयो र अर्को ब्राहमण भित्रको लोभलाई पनि भष्म पारी दिनुभयो । त्यस पछि जनक अष्टावक्र संवाद शुरु हुन्छ ।

१. ब्राहमणहरुले लोभका कारण कारागारको कैदी जीवन विताउनु पऱ्यो । त्यो भौतिक कारागार पनि हो र अभौतिक वा इन्द्रिय भित्रको कारागार पनि हो । नजानेको कुरा पनि धन–सम्पत्ति र पुरस्कारको लोभका कारण जानेको छु भन्ने ? नसक्ने कुरा पनि लोभ लालचाका कारण सक्छु भन्दाको परिणाम धेरै ब्राहमणले कारागारमा कैदीको रुपमा जीवन विताई रहेका थिए । शिक्षा सिधा थियो “लोभ भयो भने बन्धनमा परिन्छ ।”

२. राजा जनकको राज्यमा ज्ञानको कमी थिएन, तर त्यसलाई आडम्वरले छोपेर राखेको थियो । राजा जनक र आचार्य बन्दी दुबैमा आडम्वर थियो । सुनले सिङ्ग मोहरेका १००० गाई पुरस्कार दिने धोषणा गर्नु आडम्वर नै हो । ब्राह्मणहरुलाई कारागार राख्नु पनि अहङ्कारले नै हो । आत्मज्ञान प्राप्त गर्नु अघिका राजा जनक र उनका राजपुरोहित बन्दी आडम्वरबाट बन्दी बनेका प्रतिनिधि पात्र मात्र हुन् ।

३. ब्राह्मणमा ज्ञान त हुन्छ तर उनीहरुमा लोभ बढी हुन्छ । त्यही लोभका कारण उनीहरुको ज्ञानको सदुपयोग हुन सक्दैन । जनकको राज्यमा ज्ञान विज्ञानको कमी थिएन । ब्राहमण समाज ज्ञानी थियो तर ती ज्ञानी ब्राहमणहरु लोभका कैदी बनेर रहेको थिए । ब्राह्मणहरुको ज्ञानलाई लोभले छोपेर राखेको थियो । जब लोभका बोक्राहरु छुट्याइन्छ अनि मात्र ज्ञान प्राप्त हुन्छ । राजा जनकका राज्यमा धेरै ब्राहमणहरु ज्ञानी थिए तर उनीहरु लोभ र मोहका कारागारमा बन्दी बन्न पुगे । धन, सम्पत्ति, कीर्ति, पद र पुरस्कारको लोभका कारण ब्राहमणहरु कर्म बन्धनमा पर्छन् । अरुको तुलनामा ब्राह्मणका मनभित्र धन, सम्पत्तिको लोभ, पद, मान र प्रतिष्ठाको लोभ बढी हुन्छ । त्यही लोभका कारण उनीहरु कर्म बन्धनमा बाँधिन्छन् । कारागार भनेको इन्द्रियहरुले घेरेको मन भित्रको कारागार हो । भौतिक चाहानाहरुद्वारा नियन्त्रित कारागार हो । कैदी जीवन भनेको इन्द्रियहरु अथवा चाहनाबाट नियन्त्रित कैदी जीवन हो । शिक्षा सरल छ, जसले लोभ र मोह गर्छ, उ कर्मबन्धनमा बाँधिन्छ । जति

पनि लोभी व्यक्तिहरु छन् उनीहरु इन्द्रियहरुद्वरा घेरेको कारागारका बन्दी हुन् । तपाई हामी सबै इन्द्रियहरुले घेरेको कारागारका कारागारका बन्दी हौं । भौतिक कारागारबाट केही दिन पछि मुक्त भइन्छ तर इन्द्रियहरुले घेरेको कारागारबाट चाँही मुक्त हुन गाह्रो छ ।

४.शरीर कै कारण मानिस लोभी, पापी, अहङ्कारी भएको हो । यदि शरीर र मनलाई छोडि दिने हो भने सबैमा बाँकी एउटै आत्मतत्व बाँकी हुन्छ । सबैको आत्मा एउटै भएपछि सबै एउटै हुइन्छ, कसैको पनि छुट्टै अस्तित्व हुदैन्, हामी सबै एउटै हुन्छौ । एउटै भएपछि लोभ, मोह, द्वेष, अहङ्कार केही पनि हुँदैन । सबैको मनमा शान्ति हुन्छ । मानिस मानिस बीच फरक हुदैन । तसर्थ शरीर छोडेर आत्मालाई बुझ्न अष्टावक्रले जोड दिनुहुन्छ । वास्तवमा अष्टाबक्र संहिता भौतिक इन्द्रियहरुले घेरेको अन्तरमनको कारागारमा रहेका बन्दीहरुलाई छुटकारा दिलाउनका लागि गरिएको जनक र अष्टावक्र वीचको संम्वाद हो ।

अष्टावक्रलाई थाहा थियो राजा जनक प्रतिभाशाली हुनुहुन्छ र तीष्ण बुद्धि भएको राजा भएकाले छिटो बुझ्न सक्नु हुन्छ र त्यो भन्दा पनि ठूलो उनीसँग आत्मज्ञान प्राप्त गर्ने उत्कृष्ट इच्छाहरु छन् । त्यसकारण महाज्ञानी अष्टावक्रले राजा जनकलाई दुई तीन दिन भित्र आत्मज्ञान दिन सक्नुभयो । त्यही आत्मज्ञानलाई जनक अष्टावक्र सम्वाद/अष्टावक्रगीता वा महागीता भनेर हामी भन्दछौं ।

# अष्टावक्रगीताबाट मैले बुझेका कुराहरु

भगवतगीता धेरै प्रचलित छ किनकि त्यसैमा सबैथोक छ जे खोज्यो त्यही छ, त्यसैले त्यो ग्रन्थले सबैलाई खुशी पार्छ । त्यसले एउटै सत्य "आत्मतत्व" मान्दा मान्दै पनि बहुसत्यलाई समातेको छ । त्यसैकारण त्यो बढी राजनीति र थोरै मात्र धार्मिक ग्रन्थ हुन गयो, जहाँ सबैलाई खुशी पार्नका लागि ज्ञानमा धेरै "कम्पोमाइज" गरिएको छ। मैले भगवतगीतालाई होच्याउन खोजेको कदापि होइन्, म आफू पनि भगवतगीताको आँशिक साधक हुँ। भगवतगीतामा एक र बहुसत्यको संमिश्रण छ भन्न मात्र खोजेको हुँ । अष्टावक्रगीतामा चाँहि एउटै सत्य छ, त्यो हो "आत्मा" । यो धेरै प्रचलित छैन किनकि यसले एउटै सत्य मात्र समातेको छ, र पुग्ने बाटो पनि एउटै मात्र समातेको छ,त्यो हो ज्ञानको बाटो। बहुसत्य समातेको भए यो पनि धेरै प्रचलित हुन्थ्यो होला ।

कृष्णगीताको तुलनामा अष्टावक्र संहिता निकै गहिरो ज्ञानको भण्डार हो । यसो भनेर मैले कृष्ण गीता वा भगवतगीताको ज्ञानलाई अवमूल्यन गर्न खोजेको कदापि होइन। कृष्ण गीता ज्ञानगंगा फिँजिएर बगेकी छिन्, दायरा फराकिलो छ, धेरै विषयबस्तु समेटेको छ भने अष्टावक्रगीताको ज्ञानगंगा चाँहि गहिरिएर बगेकी छिन्, थोरै विषयबस्तु समेटेको छ, तर गहिरिएर ब्याख्या र बिश्लेषण गरिएको छ । अष्टावक्रको ज्ञानगंगा सिधा बगेकी छिन् भने कृष्णको ज्ञानगंगा चाँहि सर्प हिडे जसरी बक्ररेखामा बगेकी छिन् । दुबै उत्तिकै मीठा छन् । सुन्तला र आँप दुवै मीठा फल हुन् । सुन्तला र आँप बीच तुलना हुन सक्तैन । दुबै उत्तिकै उपयोगी छन् । अष्टावक्रगीता र भगवतगीता बीच आत्माका विषयमा समान धारणा छन् । आत्मा परमात्मा कै अंश हो । आत्मा अनादि, अविभाज्य, निर्गुण, निराकार अनन्त छ भन्ने शाश्वत कुरामा समानता छ । दुवै गीतामा आत्माका बारेमा खास ठूलो भेद छैन । देह र देही फरक हुन् भन्ने कुरामा दुवै एक मत छन् । आत्मामा चेतना छ, त्यही चेतनाका कारण आत्माले स्वप्रकाश पार्दछ । शरीर जुन छ, त्यो भन्दा 'म' फरक कुरा हो 'म' भनेको स्थूल शरीर होइन, यो त आत्मा हो। आत्मा भनेको यो शरीर रुपी घरलाई चलाउने मालिक हो । अष्टावक्रका अनुसार आत्मा असंग, क्रियारहित, निराकार, निर्गुण, र पूर्ण छ, मुक्त छ,

चैतन्य स्वरुप छ र इच्छारहित छ । त्यसैले आत्माका विषयमा श्रीकृष्ण र अष्टावक्र बीच तात्विक अन्तर छैन ।

यति हुँदा हुँदै पनि अष्टावक्र र भगवतगीतामा प्रज्ञा र ज्ञान प्राप्त गर्ने सत्य बुझ्ने बाटाहरु, मुक्तिको बाटा भने फरक छन् । कर्ता हुदा हुदैपनि अकर्ता बन्ने विषयमा भगवतगीतामा ब्याख्या गरिएको छ भने अष्टाबक्रको साक्षी वा द्रष्टा चाँहि फरक ठाउँमा उभिएको छ । जब ब्यक्ति केवल साक्षी मात्र हुन्छ भने उ असंग हुन्छ र कर्म बन्धनमा पर्दैन् । भगवतगीतामा चाँहि कर्ता हुदा हुदैपनि अकर्ता बन्ने संन्देश छ ।अष्टावक्रगीताले सत्यलाई नै केन्द्रीय विषय वस्तु बनाएर त्यही सत्य प्राप्त गर्ने उपायका बारेमा राजा जनकलाई बताउनु भएको छ । "अहम् वह्मस्मि" म आफै ब्रह्म हुँ अथवा ब्रह्म म भित्रै छ भन्छ अष्टावक्रगीता । भगवतगीतामा पनि श्री कृष्ण अथवा परब्रह्म सत्य हो भनिएको छ तर त्यहाँ अप्रत्यक्ष रुपले व्याख्या र वर्णन गरिएको छ भने अष्टावक्रगीतामा चाँहि सिधैं सत्यको रहस्योद्घाटन गरिएको छ । मानिसमा म अर्जुन हुँ भन्नुहुन्छ श्रीकृष्ण । तर अष्टावक्र चाँहि सबै मनुष्यहरु नै ब्रह्म हुन् भनी तत्वज्ञान दिनुहुन्छ । प्रत्येक व्यक्तिले आफू आत्माको रुपमा अनुभूति गर्नुपर्छ । 'म' मात्र सत्य हो । पंच तत्वले बनेको शरीर सत्य होइन भन्नुहुन्छ अष्टावक्र चाँहि ।

भगवतगीतामा ज्ञान प्राप्ति र मुक्तिको लागि इन्द्रिय नियन्त्रण गरी समाधिमा बस्नु पर्छ भन्ने सन्देश छ । तर ज्ञान र मुक्तिको लालसा लिई समाधिमा बस्न उचित हुदैन भन्नुहुन्छ अष्टावक्र । अष्टावक्रको दृष्टिकोणमा समाधिमा बस्नु पनि बन्धन हो । समाधि पनि कर्म हो, कर्म भएपछि बन्धन हुन्छ नै । जप, तप, यज्ञ ज्ञान आर्जन गर्ने सहायक कुरा मात्र हुन । ती कर्मबाट मुक्ति मिल्दैन भन्नुहुन्छ अष्टावक्र । जव कसैले कर्म गर्छ भने त्यो कर्म बन्धनमा पर्छ नै । मुक्तिको कामना गर्नु पनि लालचा नै हो । समाधिमा रहेर मुक्ति पाइदैन र आत्मा साक्षात्कार पनि हुँदैन । मानिसले जस्तो कर्म गर्छ त्यस्तै फल प्राप्त गर्छ । जस्तो मति उस्तै गति । अष्टावक्र ऋषि राजा जनकलाई भन्नुहुन्छ । समाधिबाट आत्माको प्रतीत हुँदैन । तिमी मोक्षको कामना किन गर्छौ ? जबकी तिमी पापी पनि होइनौं । दोषी पनि होइनौं । तिमी त साक्षात आत्मा हौं । आत्मा सर्वदा मुक्त छ । फेरि मुक्तिको कामना किन गर्छौं ? मानिस आत्मा भन्दा फरक छैन आत्मा आफैं भित्र हुन्छ । तिमी आत्मा साक्षात्कारको भ्रममा किन पर्छौ । तिमी स्वयं आत्माको अनुभूति गर

। यसरी हेर्दा अष्टावक्रको दर्शन वुद्ध र कृष्णको बीचमा छ। बुद्ध त आत्मा छ भन्ने कुरा मान्नुहुन्न । अर्को तर्फ कृष्ण आत्मा साक्षात्कारको लागि समाधिस्थ हुनुपर्छ भन्नुहुन्छ। "योगद्धारा चित्तवृति निरोधक" हुन्छ भन्नुहुन्छ पतान्जली। चित्तवृति निरोधक भनेको समाधिमा नरही सम्भव हुँदैन। समाधि बिना प्रज्ञा/ज्ञान प्राप्त हुँदैन र प्रज्ञा/ज्ञान बिना मुक्ति सम्भव हुँदैन। बुद्धले पनि त्यही मार्ग निर्देश गर्नु भएको छ। तर अष्टावक्रगीताले मन मैलिएको छैन भने यसलाई धुन आवश्यक छैन भन्छ। जव कपडा मैलिएको छैन भने किन धुने ? आत्मा त सधै सफा हुन्छ । आफैं प्रकाशित हुन्छ । तसर्थ समाधिमा वस्न जरुरत छैन । अष्टावक्र सिधै ज्ञानमा हाम फाल्नुहुन्छ भने वुद्ध क्रमवद्ध रुपले शील पालन, समाधि, प्रज्ञा/ज्ञान र अन्तमा परिनिर्वाण गन्तब्य भएको अष्टाङ्गमार्ग हिडनुहुन्छ। कृष्ण चाँहि मनबाट इन्द्रिय नियन्त्रण, बुद्धिबाट मन नियन्त्रण, आत्माबाट बुद्धि नियन्त्रण,र नियन्त्रित बुद्धिबाटै मोक्ष प्राप्त हुन्छ भन्ने संदेश दिनुहुन्छ ।

अष्टावक्रगीता भगवतगीता भन्दा एक कदम अगाडि छ, त्यो के अर्थमा भने अष्टावक्र ज्ञानको र मुक्तिका पनि कामना गर्नु हुँदैन भन्छन् । कृष्णगीता चाँही कामना सहितको कर्म गर्नु हुँदैन भन्न मै सीमित छ भने अष्टावक्रगीता चाँहि मुक्तिको पनि कामना गर्नु हुँदैन भन्छ । यी दुवैलाई तुलना गर्न सम्भव छैन । अष्टावक्र सुजाताको गर्भ मै वेदान्त सुनेर ज्ञानी भै सक्नु भएको छ। गर्भमै सामाधिस्थ भै ज्ञानका लागि परिपक्क हुनु भएको छ । राजा जनकमा थोरै आडम्बर भए पनि उनमा ज्ञान प्राप्तीको ठूलो अभिलाषा छ, सत्संग र शाश्त्रार्थबाट उनी ज्ञानमार्गमा लागि सकेका थिए । उनीहरु दुवैको मन र हृदय सफा भइसकेको छ अथवा उनीहरुको मनमा रहेका अपवित्रता हटिसकेका छन्। जब मनमा अपवित्रा नै छैन भने समाधि अनुष्ठान जरुरत नै परेन। राजा जनकसँग थोरै राजा हुँ भन्ने आडम्बर थियो तर उनमा लोभ, मोह र कोध थिएन । तसर्थ अष्टावक्रगीता सिधैं ज्ञानमा प्रवेश गर्छ तर अर्जुनमा लोभ, मोह र द्वेष छँदै थियो। उनमा गुरुहरु काकाहरु, मामाहरुको मोह थियो । त्यसैले म युद्ध गर्दिन भन्नुभयो । उनमा कौरवप्रति नजानिदो क्रोध पनि थियो। उनमा राज्यप्रति लोभ र मोह नजानिदो तरिकाले जरा जमाएर बसेका थिए । तसर्थ यस्तो अवस्थामा एक्कासी ज्ञान दिदा प्रभावकारी हुँदैनथ्यो । त्यसैले कृष्णले समाधिस्थत हुन सन्देश दिनुभयो । समाधि विना ज्ञान र मुक्ति मिल्दैन भन्नुभयो। त्यसैले भगवतगीताको लोभ, मोह र दोषबाट मुक्त हुन कर्म- ध्यान--ज्ञान-मुक्तिको मार्ग आफ्नो हिसाबमा

ठीकै होला तर ज्ञान र मुक्तिको कामना सहित समाधिमा बस्दा त यसमा लोभ लालचा जोडियो, जब लोभ लालचा जोडिन्छ भने सही ज्ञान प्राप्त हुँदैन भन्ने अष्टावक्रको दर्शन एक कदम अगाडि छ । बुझ्न के जरुरी छ भने, कृष्णले युद्ध मैदानमा लोभ, मोह, द्वेषमा भएका अर्जुनलाई दिएको संदेश हो भने अष्टावक्रले चाँहि लोभ, मोह, द्वेषबाट मुक्त, थोरै आडम्बर भएका राजा जनकलाई राजदरबारमा दिएको संदेश हो, त्यसैले फरक त छ नै । निरपेक्षमा तुलना हुन सक्दैन ।

## अष्टावक्रगीता र ज्ञानको दर्शन

भगवतगीता सबै योगहरुको सार संक्षेप हो । यसमा जे खोज्यो, त्यही भेटाइन्छ । सार संक्षेप निकाल्ने क्रममा यो जटिल बन्न पुग्यो । भगवत ज्ञानगंगाको फैलावट बढी छ । माथि बर्णन गरे जस्तै भगवत ज्ञानगंगा फराकिलो भएर बगेकी छन् उनका भँगालाहरु कर्मयोग, साङ्ख्य, ज्ञानयोग, ध्यानयोग र भक्तियोग फराकिलो भएर बगेका छन् तर गहिराई चाँहि सीमित छ । अर्को तर्फ अष्टावक्र ज्ञानगंगा चाँहि साँघुरो छ तर यसको गहिराई चाँहि धेरै बढी छ । कोशी भगवतगीता हो भने कर्णाली चाँहि अष्टाबक्र गीता हो । अझ सजिलो रुपमा बुझाउँदा ऋषिकेशमा बगेकी ज्ञानगंगा अष्टावक्रगीता हुन् भने पटनामा वगेकी ज्ञानगंगा चाँहि भगवतगीता हुन् । ऋषिकेश माथि वग्ने गंगा प्रदूषित नभएर कन्चन पवित्र छिन् यिनलाई सफा गर्नु पर्दैन तर पटनामा बगेकी गंगामा चाँहि धेरै फोहोरहरु मिसिएर अपवित्र बन्न पुगेकी छन् । त्रेत्रायुगमा आइपुग्दा सम्म मानिसको मन सफा थियो । मन त्यति प्रकृतितत्व माथि विचरण गर्दैनथ्यो । त्यसैले यसमा फोहोर लाग्दैनथ्यो । मन धेरै समय ब्रह्मतत्व मै बस्थ्यो । त्यसैले समाधिमा बस्न आवश्यक नै परेन । अपवित्रता नभए पछि अपवित्रा हटाउनु नै परेन । ऋषिकेश माथिको गंगा आफै पवित्र छिन् । सफाई गर्नु नै परेन । तर जब यिनै गंगा हरिद्वार हुँदै इलाहवाद आइपुग्छिन् ती पवित्र गंगामा अपवित्रता बढ्दै जान्छ । बच्चामा सबैको मन ऋषिकेश माथिकी गंगा झै कन्चन हुन्छ, जब मानिस बढदै जान्छ, तव मनमा अपवित्रता पनि बिस्तारै बढदै जान्छ र इलाहवादकी गंगा झै फोहोर हुदै जान्छ । भगवतगीता चाँहि इलाहवादकी गंगामा भएको फोहर र अपवित्रता सफा गर्न रचिएको ग्रन्थ हो । द्वापर युगमा फोहर र अपवित्रता निकै बढेको थियो । कलियुगमा आइपुग्दा त अपवित्रताको डङ्गुर लाग्छ,। त्यसैले प्रयाग भन्दा तलको गंगा कलियुगको जीव र जगत हुन् । त्यही मन भित्रको फोहर र अपवित्रता सफा गर्ने भित्रि ज्ञानगंगा हो

भगवतगीता । त्यसैले पहिलो चरणमा असल गुणहरुको पालन(शील) गराई अपवित्राको रोकथाम गर्ने, दोस्रो चरणमा समाधिमा रही मन र हृदयमा रहेका अपवित्रा हटाउनु । बिषहरु नहटाई अमृत खन्याएमा अमृत पनि बिष नै हुन्छ । तसर्थ बिषहरुलाई हटाई अमृत खन्याउनु पर्छ । तेस्रो चरणमा प्रज्ञा र ज्ञान प्राप्त गरी लोकको भलाइ गर्नुपर्छ । यस अर्थमा हाम्रो आध्यात्मिक यात्रा सगरमाथाको तेस्रो शिविरबाटै पनि हैन पहिलो शिवीरबाटै शुरु गर्नुपर्छ । अथवा मानवताका आधारभूत मूल्य (शील)त्यसपछि कर्म, अनि ध्यान त्यस पछि ज्ञान वा प्रज्ञा । मुक्ति त विरलैले मात्र प्राप्त गर्छन् । त्यसकारण त्यस्तो विरलै प्राप्त हुने मुक्ति कलियुगमा साध्य हुनु हुँदैन । जन्म, मृत्यु, दःुख, सुख को चक्करबाटै मुक्त हुन चाहनु पनि आफैमा स्वार्थी विचार हो जब स्वार्थी विचार हुन्छ, अष्टावक्रले भन्नु भए झै ज्ञान प्राप्त गर्ने दिशातिर अघि बढ्न सक्दैनौं ।

भगवतगीतालाई म अति आदर गर्छु । मैले यसको आंशिक साधना पनि गरेको छु । यसमा सबै स्वादहरु छन् । सबै परिकारका अन्न, फलफूल, मसला, नुन खुर्सानी मिश्रित छ । त्यसैले यो ज्ञानको चटपटे हो । त्यहाँ जुन स्वाद खोज्यो त्यही पाइन्छ । यो धेरै भन्दा धेरै शास्त्रहरुको सांराश हो, यस अर्थमा राम्रो । यसमा कपिलको सांख्य, रामानुजाचार्यको भक्ति योग, तिलक र आदिराज मनुको कर्मयोग मिसिएको छ । उपनिषदहरु त मिसिने नै भए । त्यसैले यो भैदियो ज्यादै लोकप्रिय । जसले जे खोजे पनि पाइने । तर कसैले अघाउन्जेल साङ्ख्य अथवा कर्मयोगको ज्ञान खोज्यो भने त्यो प्राप्त गर्न सक्दैन किनकि यो त आधारभूत ज्ञानको सारांश मात्र हो । त्यसैले मिठासको हिसाबले यसलाई चटपटे भन्न सकिन्छ जहाँ टमाटर, आलु, भुजा, चना, मटर, बदाम, कागती नुन खुर्सानी जे खोज्यो त्यही छ, मीठो पनि छ तर मूल्यका हिसाबले चाँहि अमूल्य । सबैको राम्रो संमिश्रण छ, सबैको आधारभूत ज्ञान छ तर यसले उच्च तहको ज्ञान दिदैन । कसैले एक किलो चना माग्यो भने चटपटेवालाले दिन सक्दैन । किनकि उसँग जम्मा आधा किलो चना मात्र हुन्छ । यही लागु हुन्छ भगवतगीतामा । यो आधारभूत ज्ञान हो । कसैले स्नातकोत्तर तहको ज्ञानको चाहना गर्छ भने उसले अष्टावक्र संहिता पढ्नुपर्छ र साधना गर्नुपर्छ ।

मनलाईै रोकेर आत्मज्ञान प्राप्त हुन्छ भन्दा वहुत खुशी होइन्छ तर मनलाई रोकेर त हेर । आह ! कति सजिलो उपाय । मनलाई रोक्नु भनेको

शान्ति प्राप्त गर्नु हो । त्यो विषयवस्तुमा पूर्ण ध्यान केन्द्रित गर्नु हो । नाकको एउटा भागमा ध्यान केन्द्रीत गर्न र मनलाई भाग्न नदिई ध्यान गर्दा त गाह्रो हुन्छ, त्यसमाथि एउटा सुक्ष्म, निराकार, र अदृष्य विषयमा ध्यान केन्द्रित गरी  मनलाई रोक्नु निकै कठिन कार्य हो । अर्को भौतिक वस्तुमा (नाकमा) ध्यान केन्द्रित गर्न त कठीन छ भने निराकारमा ध्यान केन्द्रित गर्न झन कठिन । सुनेपछि त्यो विषयलाई अष्टावक्रले भने झैं  मनन र चिन्तन गर्नु अति महत्वपूर्ण कुरा हो । त्यस मध्येको पनि उपयोगी कुरा सश्लेषण गरी आन्तरिकीकरण गर्नु वा निर्याशन गर्नु अझ कठिन कार्य हो । सुनेर आत्मज्ञान प्राप्त हुन्छ अहा ! कति सजिलो तर वेदान्त सुनेर त हेर्नुहोस् - चिन्तन मनन गर्नुहोस र आन्तरीकीकरण गर्नुहोस् । ओशो (रजनीस) र धेरै अरु आधुनिक ऋषिलाई यो सोझो र सरल लाग्यो तर म जस्तो अज्ञानीलाई चाही हेलिकप्टरले टिपेर सातौ शिविरमा पुऱ्याइदिएर लौ अव सगरमाथा चढ भने जस्तो लाग्यो । प्रयाप्त अभ्यास नभई, अक्सिजन नभई, वातावरणमा धुलमिल(acclimatized) नभई सगरमाथा आरोहण गर्न कठीन छ, लेक लाग्छ, फोक्सोले सास नै फेर्न सक्दैन । मुक्ति अष्टावक्रले भने झैं  लोभ, मोह, र द्वेषले ग्रस्त मानिसले अहिले भन्यो अहिले र भरे  भन्यो भरे प्राप्त हुने सजिलो कुरा होइन । भगवत र अष्टावक्रगीता दुवै मोक्षमा पुग्ने भऱ्याङ हुन् ।

| अष्टावक्रगीता | भगवतगीता |
|---|---|
|  |  |

भगवतगीतामा प्राकृतिक अवस्था, कर्म, ध्यान, र सांङ्ख्य वा ज्ञानका खुड्किलाहरु छन् । त्यसपछि मात्र मोक्ष प्राप्त गर्न सकिन्छ तर अष्टावक्रको भऱ्याङको बीचमा एउटा मात्र खुडकिलो (ज्ञान) छ त्यसपछि मोक्ष प्राप्त भइहाल्छ । ठूलो व्यक्तिहरु त बीचको खुडकिलो टेकेर एकैचोटि माथि उक्लन सक्छन् अथवा मोक्षमा पुग्न सक्छन् होला तर हामी जस्ता ससाना व्यक्तिहरु चाँहि उक्लनै सक्दैनौ । किनकि अष्टावक्रको गीतामा दुई खुड्किलाको बीचमा ठूलो दुरी छ । भगवतगीतामा धेरै खुड्किलाहरु छन् । जसका कारण दुई खुड्किलाहरु बीचको दुरी सानो छ, त्यसकारण, सबै व्यक्तिहरुले विस्तारै ज्ञान प्राप्त गर्न सक्छन् । अष्टावक्रको जहाजरुपी गीता सिधैं गन्तव्य स्थलमा पुग्छ । अष्टावक्रको गन्तव्य स्थल भनेको ज्ञान नै हो, मुक्ति होइन । भगवतगीता नामक जहाज चाँहि बीचमा ३।४ ठाउँ रोकिन्छ र मोक्षमा पुग्छ । अष्टावक्रको गीता एक्सप्रेस बस हो जहाँ चढे पछि एकै चोटि गन्तव्य स्थलमा पुगिन्छ । त्यसमा चढे पछि ऊ न कर्ता हुन्छ न भोक्ता हुन्छ । ऊ कुनै प्रतिकिया नजनाई केवल दृष्टा मात्र हुन्छ । अरु कर्ता र भोक्ता आफू साक्षी भयो भने असंग हुन्छ, असंग भएपछि आत्मज्ञान प्राप्त गर्न सकिन्छ । आफू कर्ता र भोक्ता र अरु साक्षी भयो भने सङ्ग हुन्छ, आत्मज्ञान प्राप्त हुदैन । बाटो असाध्य सोझो छ ।

भगवतगीता उपनिषदको आधारमा लेखिएको ग्रन्थ हो, यसले वेद सर्वकालिन सत्य हो, शाश्वत हो भन्छ । आचार्य बन्दी, महर्षि उद्दलक, उनका छोरा श्वेतकेतु, अष्टाबक्रका पिता कहोड, पनि वेदलाई अन्तिम सत्य भन्नुहुन्थ्यो । सबै पूर्वीय ऋषि महर्षिहरु वेदको ज्ञान नै अन्तिम ज्ञान हो भन्दथे तर उनले वेद माथि नै प्रश्न उठाए । वेद सर्वकालिन र अन्तिम ज्ञान हुन पनि सक्छ, नहुन पनि सक्छ । विचार र जगत अनन्त र असीम छ । ज्ञानको पनि सीमा छैन । ज्ञान, देश, काल र परिस्थित अनुसार अनुभवका आधारमा अझ बढी खारिएर अझ समृद्धि बनेर जान्छ । सधै वेद नै सही अरु गलत भन्ने हो भने, नवीनतम् ज्ञान कसरी प्राप्त हुन्छ ? त्यसैले अनुभवसिद्ध नवीनतम् ज्ञानले विश्वज्ञानको भण्डार वृद्धि हुँदै जान्छ । यस्तो अवस्थामा ज्ञानमा सीमा लगाउनु हुन्न भन्ने उनको विचार यो वैज्ञानिक युगमा पनि त्यति कै उपयोगी छ । उनी आफ्नो विचारमा अडिग थिए । उनका आफ्नै पिताले गरेको वेदको गलत उच्चारण त उनले खप्न सकेनन् र गर्भ भित्रबाटै आफ्नो पितालाई सावधानी गराए । त्यसैको रिसमा आएर आफ्ना पिताले उनलाई अष्टावक्र हुनु परोस भनी श्राप दिए । आफ्नो शरीर

अष्टावक्र भएकोमा उनलाई कति पनि दुख थिएन, किनकि उनी ज्ञान र प्रज्ञालाई हेर्थे न कि शरीरलाई । त्यसैले अष्टावक्र महाज्ञानी हुन्, अद्वैतवादी हुन् र सत्यका पक्षपाति हुन् । उनमा कर्मकाण्डमा कत्ति पनि विश्वास थिएन । उनी ज्ञानका पुजारी थिए । तसर्थ अनुभव सिद्ध ज्ञानलाई मात्र विश्वास गर्दथे र त्यही ज्ञान राजा जनक र अरु शिष्यलाई प्रदान गर्दथे । यस अर्थमा उनी अध्यात्मिक वैज्ञानिक हुन् ।

वास्तवमा अष्टावक्रगीता भनेको द्वैतवाद माथि अद्वैतवादको विजय हो । आचार्य वन्दी द्वैतवादी दर्शनका प्रतिनिधि पात्र हुन् भने अष्टावक्र चाँहि अद्वैतवादी । आचार्य वन्दी, लोभ, मोह, द्वेष र घमण्डको बन्धनमा परेका थिए अथवा लोभ, मोह र द्वेष र घमण्डले आचार्यलाई बन्दी बनाएका थिए । त्यसैले उनको नाम नै 'बन्दी' हुन गयो होला वा बुझ्न सजिलो बनाउन 'बन्दी' नाम राखिएको हो । अर्को तर्फ अष्टावक्र कर्म बन्धनबाट मुक्त थिए । यस अर्थमा अष्टावक्रगीता भनेको बन्दी (आचार्य बन्दी) र मुक्ति ( अष्टावक्र) बीचको शास्त्रार्थ थियो । क्रुरता र दया बीचको लडाई थियो । आचार्य बन्दी क्रुर थिए । जसले शास्त्रार्थमा हार्छ त्यस्ता ब्राह्मणलाई इनारमा झारी दिन्थे अथवा सभ्य भाषामा जल समाधिमा जानु पर्थ्यो । महाज्ञानी अष्टावक्र भित्र दया थियो । जसले आफ्ना पितालाई जल समाधिमा पठाएका थिए, त्यस्ता व्यक्तिप्रति उनमा अलिकति पनि प्रतिशोध थिएन । वरु दया थियो । उनले बन्दीको अहङ्कार मात्र तोड्नु भयो तर उनीप्रति दया देखाउनु भयो । आचार्य बन्दीमा बदलाको भावना थियो । वेदान्तचार्यको अहङ्कार थियो । त्यसैले जल समाधिको क्रुर नियम बनाउनु भयो । तर अष्टावक्रमा क्षमादान दिने शक्ति थियो । अष्टावक्रले क्रुर र अहङ्कारी बन्दीलाई पनि क्षमादान दिनुभयो । अष्टावक्रमा सरलता थियो भने बन्दीमा जटीलता थियो । अष्टावक्र ज्ञानका धरोहर थिए त्यसैले उनले आफूले पनि मोक्ष प्राप्त गर्नुभयो र राजा जनकलाई समेत मोक्ष दिलाउनु भयो । यस अर्थमा भगवतगीतामा २६ दैवी सम्पत्ति थिए भने अष्टावक्रगीतामा चाँहि ५ वटा मात्र गुणहरु भयो भने मुक्ति पाइन्छ । ती हुन् क्षमा, दया, सरलता, सन्तोष र सत्यता ।

अष्टावक्रले वनमा गएर क्रोध, लोभ, मोह, त्याग गर्न सकिने शास्त्रीय मान्यतालाई चुनौती दिए । लोभ, मोह र द्वेष मानिसको हृदयमा हुन्छ । घरमा हुँदैन । घर छोडेर गएपनि लोभ, मोह र द्वेष मानिससँगै

जंगलमा पनि साथै साथ जान्छन् । बरु तिनीहरुलाई हृदय मै भष्म गर्नु पर्छ भन्ने ज्ञान दिनुहुन्छ अष्टावक्र । लोभ, मोह र माया बरु दिन दिनै आ-आफ्नो कर्म पालना गर्दै विषयहरुलाई त्याग गर्दै गएमा कम हुन पुग्छन् । कर्म गर्ने तर कर्ता र भोक्ता नहुने केवल आफू साक्षी हुने हो भने मानिस बन्धनमा पर्दैन । जब आफू कर्ता, भोक्ता र अरु साक्षी हुन भन्छ भने ऊ कर्म बन्धनमा पर्छ । मानिसले मैले यति गरे, मैले यति कमाए, मैले यति उपकार गरे, भन्छ भने ऊ कर्म बन्धनमा पर्छ । सरल छ, जब "अहम्" वा "म" आउँछ उ बन्धनमा हुन्छ, जव अहम् वा "म" आउँदैन भने ऊ मुक्त हुन्छ । जव आशक्ति हुन्छ, ऊ बन्धनमा हुन्छ, जव आशक्ति छैन, ऊ मुक्त हुन्छ । जब ब्यक्तिमा ग्रहण वा त्यागको इच्छा हुन्छ, ऊ बन्धनमा हुन्छ, जब ग्रहण वा त्यागको इच्छा हुदैन ऊ मुक्त हुन्छ । यसरी हेर्दा अष्टावक्रको शरीर बाङ्गो भए पनि उनको दर्शन पक्ष सोझो छ । यसबाट दुईवटा अर्थ निस्कदैन । यसलाई गलत रुपले व्याख्या गर्न पनि कठीन छ किनकि उनको शिक्षा सोझो र सरल छ । अर्कोतिर भगवतगीता द्वन्दात्मक छ, केही ठाउँमा विरोधाभास पनि छ । यो बहुअर्थी र क्लिष्ट पनि छ । त्यसैले भगवतगीताको दर्शन बढी अमूर्त छ र बुझ्ने क्रममा धेरै व्याख्याताहरु मार्फत दशवक्र बन्न पुगेको छ । अष्टावक्रको दृष्टि स्पष्ट छ । ह्रदयबाट विषयहरुलाई खन्याऊ र त्यहाँ मानवताका (अमृत) गुणहरु भर । लोभ, मोह, द्वेष विष हुन जब सम्म हृदयमा यी बिष रहन्छन् त्यहाँ अमृत भर्न सकिदैन् । अष्टावक्रगीताको पहिलो प्रकरणको अर्थ यही नै हो । बन्दीको शरीर सोझो छ तर उनको दर्शन बाँङ्गो छ । अष्टावक्रको शरीर आठ ठाउँमा वक्र छ तर उनको दर्शन र सन्देश स्पष्ट र सिधा छन् । यसमा ब्याख्या मार्फत तोडमोडको गुन्ज्याइस छैन् । त्यसैले पण्डितहरुले यसलाई व्याख्या पनि गदैनन् ।

## अष्टावक्रगीता र सत्यताको दर्शन

ओशोले भने अनुसार भगवतगीतामा दुई जोड दुई बराबर पाँच र दुई जोड दुई बराबर ३ हुन सक्छ तर अष्टावक्रगीतामा दुई जोड दुई बराबर चार नै हुन्छ । त्यसैले यो सत्य हो । अष्टवक्रका सन्देशहरु सिधा छन् त्यहाँ कवितात्मक छैन त्यसैले यहाँ बहु बुझाइ हुन सक्दैन । श्रीमद्‌भगवतगीतामा मानिस रनभुल्ल हुन्छ कारण त्यसमा कतै एकसत्य र कतै बहुसत्यता ( आत्मा र परमात्मा) छ । पुग्नेबाटा पनि धेरै छन्: साङ्ख्य, कर्म, ध्यान, ज्ञान र भक्ति । तर अष्टवक्रको गीतामा एक मात्र सत्य (आत्मा) र हासिल गर्ने बाटो पनि एउटै मात्र (ज्ञानको) छ ।

सत्यको विषयमा अष्टावक्रगीता निकै अगाडि छ । माथि बताइए अनुसार राजा जनक राजदरवारमा आरामदायी विछ्यौनामा निदाइ रहेका थिए । उनको राज्यमा विदेशी सेनाबाट आक्रमण हुन्छ आफ्ना धेरै सेनाहरु मारिन्छन् । उनी राजदरवार छोडेर भाग्छन तर पनि उनलाई विदेशी सेनाले लखेटदै जान्छन र अन्त्यमा विदेशी सेनाले उनलाई पकिएर त्यहाका राजा समक्ष पेश गर्छन् । त्यो राजा अलिक दयालु रहेछ । उसले मध्यरात भित्र भागेर अर्कै राज्यमा शरण लिन जान सक्छस भने जा भन्ने आदेश दिन्छ । राजा भोकै तिर्खै भाग्दै भाग्दै पसिनै पसिना भएर मध्यरातमा त्यो राज्य काटेर अर्को राज्यको एउटा परोपकारी संस्थामा पुग्छन् । त्यहाँ उनको आफ्नो भन्ने कोही हुदैन । असाध्य भोक लाग्छ, त्यहाँका मानिससंग खाना माग्नुहुन्छ, तर खाना सकिएको जानकारी प्राप्त हुन्छ । आफै भाडामा टाँसिएका सीताहरु बटुलेर एउटा सानो डल्लो बनाई मुखमा हाल्न मात्र के लागेका थिए, त्यो पनि दुईटा कुकुरले थुतेर खाइदिन्छन् । राजा दुःखित भएर रुन्छन् । झसंग भएर उठ्दा उनी फेरि आफ्नै राजमहल मै हुन्छन् । त्यहाँ फेरि पहिला जस्तै दरबारमा सजाइएको विछौना, महारानी, सुसारे सभामा रहेका कर्मचारी, द्वारे, पाले आदि। उनी छक्क पर्छन् । सत्य कुन हो दरबारमा आराम पूर्वक राजा भएर बसेको सत्य हो कि भगौडा राजा भएर खाना खान नपाएर लुकेर बसेको सत्य हो ? त्यसकारण विद्वानहरुलाई बोलाउनु हुन्छ र सोध्नु हुन्छ । राजा जनकले यसै क्रममा अष्टावक्रलाई पनि सोध्नु भयो सत्य कुन हो राजदरवारमा रहेको कि, भगौडा भएर लुकेर बसेको सत्य हो ? अष्टवक्रले भन्नुभयो न त राजदरवारमा रहनु भएको सत्य हो न त भगौडा भएर लुकेको नै सत्य हो । न दरबारको सुख सत्य हो न भगौडा हुदाँको पीडा किनकि यी परिवर्तन भइरहन्छन् । सत्य त तपाई भित्रको आत्मा हो जो शास्वत छ र अपरिवर्तनीय छ, त्यो मात्र सत्य हो ।

हाम्रो आँखाले जे देख्छ त्यो सत्य होईन, जे देखिदैन त्यो सत्य हो । मानिसको मस्तिष्कले वस्तुको विम्व बनाउँछ, त्यसकै आधारमा बस्तु देख्छ । मानिसको मनमा सर्पको डर छ, त्यसैकारण उसले डोरीलाई सर्प देख्छ, मानिसको मनमा चाँदीप्रति मोह छ, त्यसैकारण उसले सिपिलाई चाँदी देख्छ, मानिसको मनमा पानीको चाहना छ, त्यसै कारण उसले मरुभूमिमा सूर्यका किरणलाई पानी देख्छ । डोरी सर्प होइन, सिपि चाँदी होइन, सूर्यका किरण पानी होइनन् । यस अर्थमा अष्टावक्रगीता सत्यको नजिक छ । त्यसैले हाम्रो आँखाले जे देख्छ त्यो सत्य होईन ।

जसरी पानीबाट तरंग, पानीका फोका र बुलबुल भिन्न होइन त्यस्तै आत्माबाट विश्व पनि भिन्न होइन । विश्व पनि आत्माबाटै उत्पन्न हुन्छ । धागो र लुगा अलग होइनन् । जसरी उखुबाट बनेको सख्खर उखुको रस मै व्याप्त छ । जसरी माटोबाट बनेको घैटो माटैमा विलीन हुन्छ । पानीबाट उठेको छाल पानी मै र सुनबाट बनेका गहनाहरु पुनः सुन मै विलीन हुन्छन् । त्यस्तै हाम्रो पनि छुट्टै अस्तित्व छैन् । अष्टावक्रगीतामा म स्वयं ब्रह्म हुँ भन्ने शिक्षा छ अथवा 'अहमं ब्रह्मस्मि' भनिएको छ । जसरी माटोबाट गाग्रो, गमला, सुराई, हाँडी बन्छन, यिनीहरुको रुप, आकार र नाम मात्र फरक छ । सबै माटोबाट बनेका बस्तु हुन । गाग्रो र गमला माटोबाट नै बन्छन् र माटो मै मिल्छन् । रुप, आकार र नाम परिवर्तन भइरहन्छ तर माटो त्यही हुन्छ । त्यो गमला भनेर चिन्यो, त्यो फुटेर माटो भइहाल्छ । पुनः माटोबाट त्यो हाडी बन्न पुग्छ । हाडी फुटेर पुनः माटो भइहाल्छ तसर्थ रुप, आकार र नाम सत्य होइनन् । हाम्रो आकार, रुप र नाम पनि सत्य होइनन् । शरीर र नाम परिवर्तनीय छन् यि सत्य होइनन् । आत्मा मात्र सत्य हो किनकि यो अपरिबर्तनीय छ ।

## अष्टावक्रगीता र साक्षीको दर्शन

भगवतगीतामा कर्ता हुँदै पनि अकर्ता बन्नुपर्छ भन्ने सन्देश छ । यसमा द्वन्दात्मकता छ । कर्तामा अकर्ता, कर्ममा अकर्म, सिद्धीमा असिद्धी, शीलामा सुन र सुनमा शिला देख्ने द्वन्दात्मकता छ । त्यसैले सामान्य व्यक्तिलाई अप्ठ्यारो महसुस हुन्छ तर अष्टावक्रगीताका सन्देश सिधा छन् । कर्ता र भोक्ता नहोऊ केवल साक्षी मात्र बन । अथवा द्रष्टा मात्र बन । विरागी बन् । अध्यात्मिक कोर्स आफैं चल्न देऊ, प्रतिकृया नजनाऊ । अनुकूल राग भनेको मोह हो र प्रतिकूल राग भनेको द्वेष हो । मोह र द्वेष दुवै उत्तिकै खराव छन् । कसैको भाव आफ्नो भावनाको अनुकूल हुँदा खुशी हुनु मोहमा पर्नु हो । प्रतिकूल हुँदा दुःखि हुनु द्वेषमा पर्नु हो । मोह र द्वेषबाट मुक्त हुनु छ भने तटस्थ बस्नुपर्छ, कुनै प्रतिकृया जनाउनु हुदैन्, केवल साक्षी मात्र हुनुपर्छ । मनलाई मुठीभित्र राख्नु र प्रतिकृयाविहीन हुनु भनेको समाधिमा रहनु नै हो ।

मानिस खरानीबाट खरानी नै हुने हो । ऊ भित्रको 'म' ले केवल साक्षी बनेर हेर्ने मात्र हो । उदाहरणका लागि समुद्रमा पानीका फोका अरबौ

संख्यामा उठ्छन् र फुट्छन् । समुद्रमा फोहोर आउँछ जान्छ । तरंगहरु आउँछन् र जान्छन् । समुद्रले शितलता प्रदान गर्छ । कतै कतै सुनामी आएर शहर नै बगाउँछ र दुख पनि दिन्छ । समुद्रमा ज्वारभाटा उत्पन्न हुन्छन् र आफैमा हराउँछन् पनि । धेरै नदीहरु समुद्रमा आएर मिसिन्छन् । पानी मेघ बनेर जान्छ, पुनः बर्षा भएर नदीबाटै समुद्रमै पुग्छन् । नयाँ पानी आउँछ र जान्छ । यसमा कर्ता बन्ने कुरै भएन न त भोक्ता बनेर पौडी खेल्नु र आनन्द लिनु न त शहर नै बगाउदा दुखी हुनु, वा शितल हावा आउदा खुसी हुनु राम्रो हो । केवल साक्षी मात्र बन्नु राम्रो हो । साक्षी मात्र बन्ने हो भने शान्त समुद्र देख्दा न आनन्द अथवा खुशी होइन्छ न त त ज्वारभाटाबाट दुखी किनकि उ साक्षी मात्र हो कर्ता र भोक्ता दुवै होइन । उ केवल समुदको अनन्तक्रमको साक्षी मात्र हो ।

भगवतगीतामा चाँहि पौडी खेले पनि नखेलेको अनुभव गर भन्छ । भोक्ता भए पनि त्यसबाट उत्पन्न हुने सुख दुःखबाट टाढा रहनु भन्ने सन्देश दिन्छ । कर्ता हुँदा हुँदै पनि अकर्ता बन भन्छ । कर्ममा अकर्म देख भनेर कृष्णले सन्देश दिनुहुन्छ । भन्न सजिलो छ, कर्ता हुँदा हुँदै पनि अकर्ता वन्न तर कर्ता हुने वित्तिकै सर्बसाधारण कर्ममा मुछिन्छ, लोभ र मोहमा फस्छ अथवा कर्म बन्धनमा पर्छ ।

## अष्टावक्रगीता र एकत्वको दर्शन

अष्टावक्रगीतामा एकत्वको दर्शन छ । अष्टावक्रगीताको अध्ययन र साधना मार्फत मानिस अनेकत्वबाट एकत्वमा भावातित हुन्छ । व्यष्टिबाट समष्टिमा रुपान्तरण हुन्छ । भगवतगीतामा सबैमा एक र एकमा अनेक देख्ने दर्शन छ । सबै जीवमा कृष्ण र कृष्णमै सबै जीव पाइन्छ । अष्टावक्रगीता एक कदम अगाडि बढेर भन्छ । म आफै ब्रह्म हुँ अथवा “अहं ब्रह्मस्मि” ब्रह्म श्वास्वत र अनन्त छ ‘म’ भनेको समुद्रको पानीमा उठेको फोका मात्र होइन ‘म’ भनेको सिङ्गो समुद्र यसमा भएका सजीव र निर्जीव सबै वस्तुहरुको एकात्मक रुप हो, अथवा म भनेको विश्व हो, मेरो छुट्टै अस्तित्व छैन । त्यसैले अनेकतामा एकत्व छ । म भनेको फोका मात्र होइन पुरै समुद्र हुँ, पुरै विश्व हुँ । समुद्रले फोका बनाउँछ र आफैं फुटाउँछ पनि । समुद्र अनन्त रुपले चलिरहन्छ । करोडौं फोकाहरु उठ्छन् फेरि फुट्छन र समुद्रमै मिल्छन्, समुद्रमा ज्वारभाटा उत्पति हुन्छन् र समुद्रमै हराउँछन् पनि । समुद्र चल्दै गर्छ पानीका फोकाहरु र ज्वार भाटहरु उठ्दै गर्छन् र समुद्रमै मिल्छन पनि

। यसमा 'म' न त कर्ता हो न त भोक्ता हो बरु समुद्रको अनन्त क्रमको उ केवल साक्षी मात्र हो । साक्षी मात्र भएपछि न त दुःख हुन्छ न त सुख नै । यस अर्थमा अष्टावक्रको गीता भगवतगीता भन्दा निकै सरल छ तर यसमा उच्च कोटीको दर्शन छ । न यसमा सकाम न निष्काम कर्मयोग, न कर्तापन न अकर्तापन, न त द्वन्दात्मक छ । केवल विश्वको साक्षीपन मात्र छ । अस्तित्वमा साक्षी वन भन्ने सन्देश मात्र छ । यसबाट कर्म नै हुँदैन । कर्म नभएपछि मुक्ति र बन्धनको कुरै भएन । शिक्षा सिधा छ तर दर्शन चाही अमूर्त छ ।

'म' भनेको सूर्यको प्रकाशमा देखिएको एउटा धुलोको कण हो र पुरै विश्व पनि हो । 'म' सँगै प्रकाश पनि छ प्रकाश विना धुलाको कण देखिदैन । त्यसैले 'म' भनेको प्रकाशको एउटा किरण पनि हो । प्रकाश र धुलोको छुट्टा छुट्टै अस्तित्व छैन्, प्रकाश भएरै धुलाको कण देखिन सक्यो त्यस्तै आत्मप्रकाश भएरै शरीर देखियो । ती दुबै आत्माबाटै उत्पति भएका हुन् । प्रकाश भित्र अनगिन्ती धुलाका कणहरु छन् । यिनीहरु प्रकाशसँग उड्दै आउँछन् अनि प्रकाशसँग हराउँछन् पनि यिनीहरुको छुट्टै अस्तित्व छैन । प्रकाश अनन्त रुपले आइरहन्छ । अनन्त– अनन्त सम्म धुलोका कण अस्तित्वमा आउँछन् र हराउँछन् । बास्तवमा न ती आएका हुन न त हराएका नै । ब्यक्तिको (धुलोको कणको) छुट्टै अस्तित्व छैन, उ भनेको पुरै ब्रह्माण्ड नै हो । 'म' भनेको पानीको फोका मात्र होइन् पुरै समुद्र पनि हो । म भनेको यो पंचतत्वले बनेको शरीर होइन, न त आत्माको भाग (जीवात्मा) हो, म भनेको आत्मा नै हो । गहना सुनको भाग होइन, सुन नै हो, माटोको भाँडा पनि माटोको अंश होइन माटो नै हो । पानीका फोका, बरफ, पानीको भाग होइनन् पानी नै हुन् । त्यस्तै गरी हामी पनि ब्रह्मका अंश होइनौ ब्रह्म नै हौ । "म आफै ब्रह्म हुँ" । मैले बुझेको अष्टावक्रको एकत्वको दर्शन यही हो । जसरी पानीबाट तरंग, पानीका फोका र बुलबुल भिन्न होइन त्यस्तै आत्माबाट विश्व पनि भिन्न होइन । विश्व पनि आत्माबाटै उत्पन्न हुन्छ ।

धागो र लुगा अलग होइनन् । जसरी उखुबाट बनेको सख्खर उखुको रस मै व्याप्त छ । जसरी माटोबाट बनेको घैटो माटैमा विलीन हुन्छ । पानीबाट उठेको छाल पानी मै र सुनबाट बनेका गहनाहरु पुनः सुन मै विलीन हुन्छन् । त्यस्तै आत्माबाट बनेको संसार आत्मा मै व्याप्त छ । म नै आत्मा हुँ । मसँग नै आत्माका सबै गुणहरु छन् । 'म' भनेको मेरो भौतिक

शरीर होइन 'म' भनेको आत्मा हो । ब्रह्म हो । सारा ब्रह्माण्ड हो । अष्टावक्रगीतामा म स्वयं ब्रह्म हुँ भन्ने शिक्षा छ अथवा 'अहमं ब्रह्मस्मि' भनिएको छ । अष्टावक्रगीतामा आत्मा र परमात्मामा विभेद छैन । भगवतगीतामा कही द्वैतवाद छ, कतै अद्वैतवाद छ । आत्मा र जगत दुई भिन्न कुरा हुन् अथवा दुवैको छुट्टै अस्तित्व छ, प्रकृति र पुरुषको छुट्टै अस्तित्व भनेर कतै व्याख्या गरिएको छ भने कतै चाँहि अद्वैतवाद छ अथवा परमेश्वर, पुरुषोत्तम अथवा कृष्णतत्व मात्र एउटै सत्य हो भन्ने छ । कतै चाँहि ब्रह्म र जीव फरक हुन् भन्ने छ । प्रकृति र पुरुष फरक हुन्, आत्मा र परमात्मा फरक हुन् भन्छ भगवतगीता । अष्टाबक्र चाँहि जीव र जगतमा पनि आत्माकै स्वरुप देख्नुहुन्छ । जीव र जगतको छुट्टै अस्तित्व देख्नुहुन्न् अष्टावक्र । आत्माकै स्वरुप देख्नुहुन्छ । जीव र जगतलाई मिथ्या मान्नुहुन्छ । भगवतगीतामा मानिस प्रकृति तत्वमा आकृष्ट भै प्रदूषित हुन खोज्छ तर परमात्माले त्यसलाई नियन्त्रण गरी पुरुषतत्वतिर लगाउनु हुन्छ भनेर व्याख्या गरिएको पाइन्छ भगवतगीतामा । त्यसैले भगवतगीतामा धेरै धारहरु छन् । हाँसी हाँसी भगवानको साक्षात्कार गर्न सकिन्छ भने दुःख कष्ट किन गर्नु पऱ्यो ? समाधि भनेको कर्म हो र कर्म भनेको बन्धन हो । तसर्थ समाधिमा बस्नु पनि कर्मबन्धन हो भन्छ अष्टावक्र गीता चाँहि । द्वैअर्थी छ भगवतगीता तर अष्टावक्रगीतामा चाही पूर्ण रुपमा अद्वैतवादी छ "अहमं ब्रह्मस्मि" भनेर व्याख्या र विश्लेषण गरिएको छ । यसमा कुनै दुविधा छैन ।

यसरी हेर्दा सबैबीचको एकता अथवा आत्माको एकत्वपन हेर्ने हो भने Theory of greater ecology सँग धेरै हदसम्म मेल खान्छ । म भनेको एउटा व्यक्ति होइन । पूरै ब्रम्हाण्डको एउटा एकत्व रुप हो । व्यक्ति स्वयंको छुट्टै अस्तित्व छैन । उसको अस्तित्व पूरै ब्रह्माण्डमा छ । ऊ आत्माकै उपज हो, सारा ब्रह्माण्ड पनि आत्मा कै उपज हो । यस अर्थमा यो ब्रह्माण्ड पनि आत्मा कै स्वरुप हो भन्दा यो बृहत ecology सँग मेल खान्छ । धार्मिक रुपले हेर्ने हो भने उनको दर्शन अद्वैतबादको दर्शनमा अडेको छ । जगत र जीवको छुट्टै अस्तित्व छैन, यिनीहरु स्वतन्त्र छैनन् । यिनिहरु आत्मा कै स्वरुप हुन् ।

## अष्टावक्रगीता र समष्टिको दर्शन

अष्टावक्रको दर्शन भनेको नै **ब्यष्टिबाट समष्टि**मा भावातित हुनु हो, अनेक अस्तित्वबाट एकत्वमा रुपान्तरण हुनु हो । उनका अनुसार पञ्चतत्वबाट बनेको जुन देह छ त्यो आत्मतत्वबाट पूर्ण रुपले फरक वस्तु

हो । जसले शरीर र आत्मालाई फरक–फरक देख्छ, उसले मुक्ति प्राप्त गर्न सक्छ । भगवतगीता र अष्टावक्रगीता दुवैले आत्माको सर्वोच्चतालाई स्वीकार्छन् । अष्टावक्र देह र देहीबीचको फरक देखाउन उदाहरणहरु प्रस्तुत गर्छन् । अष्टावक्रगीता शंकराचार्यद्वारा प्रतिपादित अद्वैतवादसँग धेरै मिल्छ । उनको गीतामा दुबै स्थूल र सूक्ष्मसंसारमा आत्मा बाहेक केही देखिदैन । कृष्ण आत्मा परमात्माको अंश हो भन्छन् भने अष्टावक्र एक कदम अगाडि बढेर आत्मा र परमात्मा एउटै हो भन्नुहुन्छ । जसरी पानीबाट तरंग, पानीका फोका र बुलबुल भिन्न होइन त्यस्तै आत्माबाट विश्व पनि भिन्न होइन । विश्व पनि आत्माबाटै उत्पन्न हुन्छ । जीव र जगत पनि आत्माको बाह्य स्वरुप देख्नुहुन्छ अष्टावक्र । आत्मामा नै एकत्व देख्नु हुन्छ अरु केही देख्नुहुन्न ।

अष्टावक्रगीतामा भने अनुसार जब व्यक्तिमा लोभ, मोह र द्वोष छैन र उ आत्मामय भैसकेको छ भने न त उसले त्याग्छ न त ग्रहण नै गर्छ, न विलय नै हुन्छ । यो भनेको नै मुक्ति हो । सुख, दुख समान, जन्म मृत्यु समान हुन्छ भने त्यो मुक्ति नै हो ।

उनको दर्शनमा सर्वस्वमा म र ममै सर्वस्व छ । म सर्वस्वमा निहित छु, मेरो छुट्टै अस्तित्व छैन । फेरि ममै सर्वश्व छ भन्यो भने त्यो न त्याग हो, न ग्रहण, न त विलय नै । समुद्रमा तरगं उठछन् र हराउँछन्, न त त्यो त्याग हो, न ग्रहण, न त विलय नै । न त त्यसबाट बृद्धि हुन्छ न त क्षति नै ।

## अष्टावक्रगीता र आत्माको दर्शन

अष्टावक्र र उनीभित्रको 'म' बीच फरक देखाउन कै लागि दुईवटा अतिको संगम अष्टवक्रमा देखाइएको छ । अष्टावक्र भौतिक प्राणी हुन वा होइनन् त्यो शोधको विषय हो । केवल ज्ञान होस भन्नकै लागि उनको शरीर वक्र देखाइएको हो कि ? उनको असुन्दर शरीर भित्र सुन्दर ज्ञान थियो । धेरै सुन्दर व्यक्तिमा असुन्दर ज्ञान छ । उदाहरणले यो देखाउँछ् कि पञ्चतत्वले वनेको शरीर भन्दा 'म' फरक तत्व हो । पञ्चतत्वले बनेको अष्टावक्र, स्टेफेन हकिन्स, राजा अकवर सबैको शरीर असुन्दर थियो तर यी तीनै जना भित्र अति सुन्दर ज्ञान थियो । जसले शरीर मात्र हेर्छ, उसले भौतिक सुन्दरता देख्छ तर आध्यात्मिक सुन्दरता देख्दैन । अष्टावक्रका शब्दमा तिनीहरु चर्माकार(चमार) हुन्, जो शरीर मात्र हेर्छन् । यहाँ चमारलाई हेय गर्न

खोजिएको हैन, बरु जो व्यक्तिहरु छालाको आधारमा मूल्य तोक्छन् तीनीहरु सबैलाई चर्माकार भन्न खोजिएको हो । कालो छालाको कम मूल्य, गोरो छालाको बढी मूल्य देख्ने वर्तमान अर्थशास्त्र र ज्ञानशास्त्रका धरोहरहरु सबै चर्माकार नै हुन् । एउटै काम गरे वापत गोराले यु.एस.डि १०० र कालाले यु.एस.डि १० पाउने नियम बनाउनेहरु पनि चर्माकारहरु नै हुन् । सेतो छालाले लेखेका सबै किताब राम्रो कालोले लेखेका सबै नराम्रा भन्ने पनि चर्माकारहरु नै हुन् ।  एउटै कामका लागि महिला र पुरुष बीच फरक ज्याला तोक्ने पनि चर्माकार नै हुन् ।

ज्ञानका हिसाबले मापन गर्ने हो भने अष्टावक्र आफ्नो समयका सर्वोच्च धरोहर हुन् । उनले वेदान्तलाई अन्ध समर्थन गरेनन् । गर्भबाटै उनले  बाबुलाई सावधानी गराए । बाबुको श्रापका कारण अष्टावक्र भएर जन्मनु परे पनि उनमा रत्तिभर बाबुप्रति द्वेष थिएन किनकि उनी अष्टावक्र भित्रको ‘म’ मात्र हेर्थे । कहोड भित्रको ‘म’ हेर्थे, उद्दलक भित्रको ‘म’ हेर्थे र जनक भित्रको ‘म’ हेर्थे । चार वटैको ‘म’ एउटै हो । सबै भित्र एउटै ‘म’ देखे, एउटै आत्मा देखे । यस अर्थमा उनीले आफ्नो समयमा सत्यको लागि अध्यात्मिक क्रान्ति नै छेडे । ज्ञान प्राप्त गर्न कर्म गर्ने, समाधिमा बसेर ध्यान गर्ने, भक्ति गर्ने, सबैलाई तर्क र ज्ञानका औजारद्वारा गलत सावित गरिदिनुभयो । मनलाई रोक्ने र ज्ञानलाई चिन्तन मनन र निर्याशनबाटै खार्ने र ज्ञानमा डुब्ने काममा प्राथमिकता दिए । ज्ञानलाई खार्ने क्रममा वेदान्त सत्य हुन पनि सक्छ, असत्य पनि हुन सक्छ भनी वेदान्त माथि नै प्रश्न उठाए । साधु सन्तप्रति पनि विश्वास गरेनन् किनकि उनीहरुको मन भौतिक संसारमा विचरण नगरे पनि आन्तरिक वा सूक्ष्मसंसारमा डुलिरहन्छ । जब मन डुल्छ अनि एकाग्र हुन सक्दैन । तसर्थ समाधिबाट होइन, तनावबाट पनि होइन, आन्तरिक वा बाहिरी भ्रमणबाट होइन, सूक्ष्म र स्थूल जगतको भ्रमणबाट होइन बरु केही नगरी बसी आन्तरिक भ्रमण रोकी, समाधि रोकी, तनाव छोडी, विश्राम गरेमा आत्मज्ञान प्राप्त हुन्छ भन्नुहुन्छ अष्टावक्र । यो नै उनको  वैकल्पिक सिद्धान्त हो । हुन पनि हो । बुद्धले हाड छाला मात्र भएर समाधिमा बसे, कठीन व्रत बसे । निराहार बसे । तनाव जीवन विताए तर ज्ञान प्राप्त भएन । उनीले सूक्ष्म जगतको भ्रमण धेरै गरे तर पनि ज्ञान प्राप्त भएन । ज्ञान जंगलमा बसेर जप तप गरेपछि प्राप्त हुन्छ भन्ने उपागममाथि पनि उनले प्रश्न उठाए । ज्ञान प्राप्त गर्न जंगल जानु पर्दैन, घरमै बसी पनि गर्न सक्छौं भन्ने संदेश दिए । समाधि त सहायक कुरा मात्र

हो भने । मूल कुरा आत्मा हो भन्ने वैकल्पिक ज्ञानको राजमार्ग निर्माण गरे । नभन्दै महावीर र जनकले यही बाटोबाटै आत्मा साक्षात्कार गरे ।

ओशोले भने जस्तै कृष्णले भगवतगीतामा यति धेरै विकल्पहरु दिए कि त्यहाँ राजनीतिज्ञ पनि अटाए, कुटनीतिक पनि अटाए, कलाकार, र अपराधीहरु पनि । सबैले खेल्ने ठाउँ पाए । विकर्ममा कर्म देखेपछि भै गयो, त्यसैले अपराधीहरु पनि अटाए । यसमा हिंसावादी पनि आए, अहिंसावादी पनि आए । कर्म सन्यासीहरुले पनि यसलाई पवित्र ग्रन्थ देखे भने कर्मयोगैहरुले यसलाई कर्मयोगको मूल प्रवाह देखे । त्यसैले यो बढी राजनीतिक र थोरै अध्यात्मिक ग्रन्थ हुन गयो । तर अष्टावक्रले ती सबै विकल्पहरुलाई वन्द गरिदिए । सत्य एउटा हो र बाटो पनि एउटै छ भनेर सबै बाटाहरु बन्द गरिदिए । ज्ञान समाधिबाट प्राप्त हुँदैन । तनावबाट प्राप्त हुँदैन । आन्तरिक विचरणलाई रोक भन्नुभयो । मोक्षको लालसा लिएर समाधिमा वस्नुको अर्थ छैन भन्छन् अष्टावक्र । कुनै भौतिक र आध्यात्मिक उद्देश्य नलिई विश्राम गरी बसे पछि मन शान्त हुन्छ । तनाव हुँदैन । मनलाई शुन्यमा राख्न सल्लाह दिनुहुन्छ अष्टावक्र । यस अर्थमा अष्टावक्र दर्शन बुद्धको शुन्यवाद भन्दा पनि माथि छ । बुद्धको ध्यान कुनै भगवानप्रति भक्ति नगरी गर्नु पर्छ भन्ने सन्देश राम्रो हो । यो भन्दा पनि ध्यानमा बस्दा पनि प्रज्ञाको र परिनिर्वाणको लोभ, लालचा हुन्छ भन्छन् अष्टावक्र । अष्टवक्रको दर्शनमा कुनै लोभ, लालचा छैन । यति हुँदा हुँदै पनि उनी बुद्ध जस्तो अनात्मावादी अथवा आत्मा नमान्ने नास्तिक होइनन् । उनी आत्माका बारे व्याख्या र विश्लेषण गरी आत्मज्ञान दिने सबैभन्दा ठूला धरोहर हुन् ।

गहिरिएर हेर्ने हो भने मनलाई शुन्यमा राख्नु भनेको मनलाई नियन्त्रण गर्नु हो । मनलाई मुठी भित्र राख्नु हो । यसो गर्नु भनेको ध्यान नै हो । मनलाई मुठीभित्र राख्नु भनेको मनमा नराम्रा र राम्रा दुबै कुराहरु आउन नदिनु हो । यो भनेको मनको तालिम हो, मनको एकाग्रहता नै हो । यस अर्थमा हेर्दा अष्टावक्रगीताको *मनलाई मुठी भित्र राख्नु* र भगवतगीताको ध्यानयोग वा *चित्तबृति निवारण* वा बुद्धको *ध्यान* बीच समानता पाइन्छ । मनको नियन्त्रणका हिसाबले अष्टावक्रगीता एक कदम अगाडि छ । मानिसको मनले सुख दुख जे अनुभूति गर्छ, त्यो मनले खडा गरेको विम्ब मात्र हो, सत्य होइन । मनले सुख महसुस गऱ्यो भने दुःख पनि सुख हुन्छ मनले सुखलाई पनि दुःख मान्ने हो भने सुख पनि दुखमा रुपान्तरण हुन्छ ।

रामकृष्ण परमहंशले क्यान्सरको पीडालाई पनि सुखमा परिवर्तन गर्नुभयो, महर्षि दयानन्दले बिषले अत्यन्त सताएको बेला पनि सुख नै अनुभूति गर्नु भयो । त्यसैले मन नै अध्यात्मिक विकाशको केन्द्रीय कुरा हो ।

यो विश्व कुनै फरक कुरा होइन समुद्र भित्रको मरेको शव, फोहर पानीका फोका, माछा तथा अरु जीव समुद्रसगै अस्तित्वमा आउँछन् र लोप हुन्छन् । तसर्थ यो माछा हो । यो मरेको शव हो । यो पानीको फोका हो । यो जल कम्भी हो भन्नु गलत हो । बरु आत्माको एकत्व हो । तसर्थ यस्तै समुदायमा एकत्वको भावना भयो भने यो मेरो यो तेरो हुँदैन । बरु सबैको एउटै अस्तित्व हुन्छ । जसबाट लोभ, मोह र द्वेष हुँदैन र समाजमा अमन चयन हुन्छ । वन्दीका कारण आफ्ना पिताले जल समाधि लिनु भएको थियो तर पनि उनमा प्रतिशोध थिएन । बन्दीप्रति क्षमाशील थिए । दयावान थिए । यसबाट प्रमाणित हुन्छ कि उनी द्वेष, शत्रुता र इर्ष्याबाट मुक्त थिए ।

तालिका १: अष्टाबक्र र बन्दी वीचको असमानता

| **बन्दी** | **अष्टाबक्र (मुक्ति)** |
|---|---|
| द्वैतवादी | अद्वैतवादी |
| आकार | निराकार |
| दण्डशीलता | क्षमाशीलता |
| क्रुर | दयावान |
| हिंसात्मक | अहिंसात्मक |
| क्लिष्ट दर्शन | सरल दर्शन |
| कठमुल्लाबादी | परिवर्तनशील |

प्रत्येक व्यक्तिमा उसको स्वतन्त्र आत्मा छ। मरणोपरान्त शरीरबाट निस्केर जान्छ। यो वेद मिमाशा भ्रामक छ। वन्दीमा बैदिक ज्ञानको अहङ्कार थियो तर अष्टावक्रमा थिएन। वेदको ज्ञान अन्तिम ज्ञान होइन, कालान्तरमा सिद्धान्त पनि परिवर्तन हुन्छ,भन्नुहुन्छ अष्टाबक्र। वेद अन्तिम मान्नु ज्ञानको लघुता ठहर्छ भन्नुभयो अष्टाबक्रले । अष्टाबक्र र बन्दी वीचको असमानता माथि दिइएको छ । जो व्यक्ति लोभ, मोह र द्वेषबाट अलग छ उसले म मोक्षमा छु भन्ने अनुभव गऱ्यो भने उ मोक्षमा हुन्छ। बन्धनमा छु भन्ने हो भने बन्धन मै हुन्छ ।

भगवतगीताद्वारा देखाइएको मोक्षको बाटो लामो छ, कठीन छ भने अष्टावक्रको मोक्षको बाटो चाँहि अति छोटो । अष्टावक्र भन्नुहुन्छ । मोक्ष अहिले यति नै बेला सम्भव छ । मनले म बन्धनमा छैन भनेर मोक्षको अनुभूति गर्नुहोस् मोक्ष प्राप्त भईहाल्छ । तर मोक्ष प्राप्तगर्ने चाहाना छ भने त्यो पनि लालचा हो । मोक्ष पनि मनले सोचेर तयार गरिएको एउटा बिम्ब मात्र हो । राजा जनकले छोटो अवधिमा मोक्ष प्राप्त गर्नुभयो किनकि वहाँमा लोभ, मोह र क्रोध थिएन । थियो त उनको मनमा थोरै आडम्बर मात्र । उनी पूर्ण रुपमा विषयबाट अलग हुनुभयो । सबै तन, मन, धन अष्टाबक्रमा समर्पण गर्नु भयो । त्यसपछि वहाँले म बन्धनमा छैन भन्ने सोच्नु भो । म मोक्षमा छु भन्ने सोच्नु भयो र मोक्ष प्राप्त गर्नुभयो । उनलाई जाँच्नका लागि जनकपुरमा आगो लाग्यो भनेर सुनाएँ । उनको अनुहारमा कुनै परिवर्तन भएन । त्यसपछि उनलाई फेरि बढी कर संकलन भएको, बढी अन्न फलेको समाचार सुनाएँ । उनमा कत्ति पनि परिवर्तन आएन । राजा जनकलाई न त सुख हुन्थ्यो न त दुःख नै । उनी विदेह बने । उनले जन्म, मृत्यु, सुख, दुःखबाट मुक्ति पाए । यस अर्थमा हेर्दा मन नै हो जसले मानिसलाई मुक्ति दिलाउँछ । मन नै हो जसले मानिसलाई कर्मबन्धनमा पार्छ । बुद्धले र कृष्णले भने जस्तो मुक्ति/परिनिर्वाण प्राप्त गर्न कठिन अवस्था होइन । मोक्ष त विषय चाहना नहुने हो भने अहिले भने अहिले र भरे भने भरे प्राप्त गर्न सकिने कुरा हो भन्छन् अष्टावक्र । मोक्षलाई भगवतगीताले यति धेरै प्राथमिकता दियो खोइ किन हो ? मुक्तिको लोभ र बन्धनको डर दुवै स्वार्थले भरिपूर्ण कुरा हुन् । अष्टावक्रगीतामा चाँहि ज्ञानले प्राथमिकता पाएको छ । मुक्तिले होइन । जो व्यक्ति विषय चहानामा छैन उसले म सधैं मुक्त छु भन्ने हो भने सधैं मुक्त हुन सक्छ । मैले अष्टावक्रगीताबाट बुझेको मुक्ति यही हो ।

## अष्टावक्रगीता र सरलताको दर्शन

महावीर भन्नुहुन्छ राम्रो सँग सुन्ने हो भने सुनेरै पनि मोक्ष प्राप्त गर्न सकिन्छ । अष्टावक्रमा यही लागु भयो । उनले गर्भावस्थामा रहँदा वेदका कुरा सुन्नु भयो । शास्त्रका कुरा श्रवण गर्नुभयो । त्यसपछि चिन्तन गर्नुभयो । त्यसपछि मनन गर्नुभयो मनन पछि संश्लेषण वा निर्याशन गर्नुभयो र चाहिने जति मात्र लिनुभयो । भनिन्छ सापट लिएको ज्ञान काम लाग्दैन तर उनले त्यो ज्ञानलाई मनन गरे । मानिस कर्मबन्धनमा हुन्छ भन्ने कुरा मानेनन् ऊ अनादिकालबाटै स्वतन्त्र छ । ऊ कर्ता पनि होइन र भोक्ता पनि होइन

केवल साक्षी मात्र हो भने । कर्ता र भोक्ता नभए पछि पहिल्यै देखि उ स्वतन्त्र छ, बन्धनमा छैन । मुक्त हुन, न त कर्म नै गर्नु पर्छ न त कर्म सन्यास नै । यो सबै मनले सोच्ने कुरा मात्र हुन् । कर्म र कर्मबन्धन मनले सृजना गरेका विम्व मात्र हुन् । कर्म बन्धनमा छैन भन्ने हो भने कर्मबन्धनमा हुँदैन, कर्म बन्धनमा छु भन्यो भने कर्मबन्धनमा हुन्छ । मूल कुरा चाँहि मन हो, मनले नै कर्म बन्धनमा पार्छ र यसले नै मुक्तितिर लैजान्छ । मन नै यस्तो तत्व हो जसले लोभ, मोह, द्वेष, घमण्ड उत्पादन गर्छ । इन्द्रिय चाहनाको बन्धनमा रहेर मनले कर्म गर्दै गयो भने उ कर्म बन्धनमा पर्छ । इन्द्रियजन्य चाहनालाई मनले नियन्त्रण गर्ने हो भने ऊ मुक्ति हुन्छ । म अस्तित्वमा छु भन्नु नै बन्धन हो । मेरो छुट्टै अस्तित्व छैन म पूर्ण अस्तित्व वा ब्रह्म नै हुँ भनेर बुझ्नु नै मुक्ति हो । भगवता गीता ज्ञानकाण्डको पुस्तक हो तरपनि यो कर्मकाण्डबाट पूर्ण रुपमा मुक्त छैन । यज्ञ, र जप जस्ता कुराहरु थोरै भए पनि आएका छन् । अष्टावक्रका अनुसार मुक्तिको लागि न प्राणायम जरुरी छ न त ध्यान वा कठीन तपस्या नै, न त पूर्व तयारीको आवश्यक छ । ज्ञान नै सबै थोक हो त्यसैले उनको दर्शन ज्ञानमा अडेको छ । यो यस्तो उफ्रयाई हो जसबाट सिधै मुक्तिमा पुगिन्छ । भगवतगीताको ज्ञान यात्रा नर्सरीबाटै शुरु हुन्छ र पि.एच.डी पछिको अध्ययनसम्म चल्छ अथवा भगवतगीताबाट मुक्ति प्राप्त गर्न धेरै चरणहरु पार गर्नु पर्छ, तर अष्टावक्रगीताबाट चाँहि सिधै मुक्ति मिल्छ ।

भगवतगीता निकै जटिल छ कतै कर्मयोग उत्तम, कतै ज्ञानयोग र कतै भक्तियोग उत्तम भनेर कृष्णले अर्जुनलाई बताउनु हुन्छ । कर्मयोग पढ्दा मानौं यो भन्दा उत्तम अर्को बाटो छैन जस्तो लाग्छ । ज्ञान योग पढ्दा, ज्ञान नै सर्वोपरी जस्तो लाग्छ । अनि भक्तियोग सजिलो र बढी फलदायक हुँदा यो नै उपर्युक्त बाटो जस्तो लाग्छ । अर्जुनलाई मात्र होइन सबै मानिसलाई भगवतगीता पढ्दा र साधना गर्दा धर्मसंकटमा पर्छन तर अष्टावक्रगीता चाँहि सिधा छ, यस्मा त्यस्तो जटिलता छैन । मानिसले श्रवण, मनन, चिन्तन र निर्याशन (सश्लेषण )बाटै आत्मज्ञान प्राप्त गर्न सक्छ भन्छन् अष्टावक्र । उनी स्वयंले सुजाताका गर्भमा रहेर वेदान्त सुन्नुभयो । मनन र चिन्तन गर्नुभयो । वेदले जे भन्छ, त्यो नै सत्य हो भन्ने शास्त्रीय मान्यतालाई भत्काउनु भयो, मन्थन र चिन्तनमा केन्द्रित हुनुभयो । उनको लागि ज्ञानको मार्ग नै एक र सर्वोतम मार्ग हो । आत्मज्ञान लिन त्यति कठिन छैन । मानिस भित्र 'म' छ 'म' भनेको निर्गुण, निराकार र शाश्वत हो । आकार, गुण र रुप

होइन्न । मनले नै कर्म बन्धनमा पार्छ र यसले नै मुक्ति पनि दिलाउँछ । मनले म बन्धनमा छु भन्यो भने बन्धनमा रहन्छ र म मुक्तिमा छु भन्यो भने ऊ मुक्ति हुन्छ । तसर्थ प्रत्येक व्यक्तिले म कर्ता होइन म भोक्ता पनि होइन म केवल साक्षी मात्र हुँ भनी सांसारिक वस्तु र विषयबाट टाढा रहने हो भने अथवा अलग हुने हो भने ब्यक्ति तुरुन्त मुक्त हुन सक्छ । जटिल बाटो हिड्न जरुरी छैन । यस अर्थमा भगवतगीता भन्दा अष्टावक्रगीता सरल र सोझै सत्यसँग जोडिएको छ । ज्ञानयोगका हिसाबले अष्टावक्रगीता अव्बल छ भने कर्मयोगका हिसाबले हेर्दा भगवतगीता सर्वश्रेष्ठ छ । तसर्थ एकले अर्कालाई प्रस्थापन गर्दैनन् बरु एक अर्काका पुरक हुन् । धेरैले भन्छन् कर्मयोगीका लागि भगवतगीता र ज्ञानयोगीका लागि अष्टवक्र गीता ।

## अष्टावक्रगीता र स्वतन्त्रताको दर्शन

माथि व्याख्या गरे जस्तै म अस्तित्वमा छु भन्ने सोच्यो भने कर्म बन्धनमा पर्छ । मेरो कुनै अस्तित्व छैन, म त केवल ब्रह्माण्ड (existence) नै हुँ भन्ने बुझ्यो भने उ मुक्त भयो । मन नै हो जसले कर्म बन्धनमा पार्छ । मन नै हो जसले कर्म बन्धनबाट मुक्ति पनि प्रदान गर्छ । म धुलोको कण हुँ, प्रकाशसंगै आउँछु र उससंगै जान्छु, मेरो छुट्टै अस्तित्व छैन, अर्का तर्फ ममा नै ब्रह्माण्ड छ र आत्मा छ भनेर बुझ्यो भने उ मुक्त भयो । मेरो आफनो छुट्टै अस्तित्व छ भन्ने सोच्यो भने उ बन्धनमा भयो । म मात्र बुझ्यो भने बन्धनमा भयो, म भित्रको “म” बुझ्यो भने मुक्त भयो । भगवतगीताले मनलाई प्रकृतितत्वमा राखेको छ, त्यो आंशिक मात्र सत्य हो । इन्द्रिय चाहानाकै कारणले मनले लोभ, मोह, व्देष, धमण्डका साथ कर्म गराउँछ र बन्धनमा पार्छ, त्यसैले यो प्रकृतितत्व हो । मनले नै लोभ, मोह, व्देष, धमण्ड हटाई अकर्म गराउँछ र पुरुषतत्वसंग जोडछ पनि । यसरी हेर्दा मनले नै बन्धनमा पार्छ र यसले नै स्वतन्त्रता प्रदान गर्छ । मन पापी मात्र होइन, धर्मी पनि हुन्छ । मनले भौतिक संसारमा रुमल्ने मात्र गर्दैन, सूक्ष्म संसारतिर डोऱ्याउने कार्य पनि गर्छ । मनले कर्म बन्धनमा पार्छ । यसले नै कर्म बन्धनबाट मुक्ति पनि दिलाउँछ । तसर्थ मन शुद्ध गर्न जरुरी छ । अष्टावक्रगीतामा मनलाई शुद्ध राख्न बढी महत्व दिइएको छ । मन नै हो जसले मानिसलाई कर्मबन्धनमा बाँध्छ र यसले नै कर्म बन्धनबाट मुक्त पनि गराउँछ । म त ब्रह्माण्ड (existence) हुँ भन्ने बुझ्यो भने ऊ स्वतन्त्र हुन्छ । म त केवल पानीको एउटा फोका मात्र हुँ भन्यो भने मुक्ति हुन्छ, मेरो छुट्टै अस्तित्व छ भन्यो भने बन्धनमा पऱ्यो । मूलतः इन्द्रिय चाहानाले कर्म

गऱ्यो भने ऊ बन्धनमा पऱ्यो । इन्द्रिय चाहनालाई दमन गरेर लोभ, मोह, व्देष, धमण्ड छोड्यो भने उ स्वतन्त्र हुन्छ । तसर्थ स्वतन्त्रता हासिल गर्नु कठीन कुरा होइन । मनले म बन्धनमा छु भन्यो भने बन्धनमा हुन्छ । म मुक्तिमा छु भन्यो भने मुक्त हुन्छ ।

## अष्टावक्रगीता र शुद्धताको दर्शन

अष्टावक्रगीतामा शुद्ध आत्माको व्याख्या छ । कारण आत्माले पुण्य र पाप लिदैन । आत्मा अनादि कालदेखि नै विशुद्ध छ भन्ने मान्यता राख्छ । यता भगवतगीता चाहि आत्मा शुरुमा शुद्ध नै हुन्छ, तर जब आत्मा प्रकृति तत्वसँग लहसिन्छ, त्यसमा अपवित्रता टाँसिन्छ र प्रदूषित हुन्छ भन्छन् कृष्ण तर अष्टावक्रका अनुसार आत्मा सदैव शुद्ध हुन्छ । भगवतगीता "भौतिक वस्तुको संसर्गमा रहेर आत्मामा अपवित्रता टाँसिन्छ तसर्थ यसलाई शुद्ध गर्नु पर्छ " भन्ने मान्यता राख्छ भने अष्टवक्र चाँहि अपवित्रता पस्नै नदिने अथवा रोकथाममा जोड दिनुहुन्छ । भगवतगीता सामान्य व्यक्तिहरुका लागि श्रीकृष्णले दिनु भएको सन्देश हो भने अष्टावक्रगीता चाँहि लोभ, मोहबाट मुक्त विशिष्ट व्यक्ति(राजा)लाई दिइएको सन्देश हो । तसर्थ पछिल्लो बढी शुद्ध छ ।

अष्टावक्रका अनुसार ज्ञान पनि शुद्ध नै हुन जरुरी छ । शुद्ध ज्ञानविना मुक्ति सम्भव हुँदैन । शुद्धज्ञान भनेको आत्माशुद्धी सम्बन्धित ज्ञान नै हो । हाम्रा कलुषित मन र कर्मका कारण ज्ञान प्रदूषित वा कलुषित हुन्छ । त्यो ज्ञानलाई प्रदूषण हुनबाट बचाउन गुरु, शिष्य परम्पराबाट विद्या आर्जन गर्नु पर्छ । मनले अपवित्र कुरा सोच्नु नै हुँदैन । मन शुद्ध हुन जरुरी छ । मन शुद्ध छ भने व्यक्ति बन्धनमा पर्दैन । मनले मुक्त छु भनेर सोच्ने हो भने मानिस मुक्त नै हुन्छ, बन्धनमा छु भन्ने हो भने बन्धनमै हुन्छ ।

विचार पनि शुद्ध हुनु जरुरी छ । अष्टावक्रगीताका अनुसार जस्तो कर्म र विचार छ, त्यस्तै गति प्राप्त हुन्छ अथवा जस्तो मति त्यस्तै गति । आत्मा त सधै शुद्ध नै हुन्छ तर मन, ज्ञान र विचार चाँहि सधैं शुद्ध हुँदैन । चाहनाले मनलाई प्रदूषित गराई दिन्छ । काम वासनाले मन र ज्ञानलाई अपवित्र बनाई दिन्छ । त्यसैले विषय, वासनालाई विषको रुपमा व्याख्या गरिएको छ । मनलाई शुद्ध बनाउने हो भने यसलाई मुठ्ठी भित्र राख्नु पर्छ अथवा मनलाई नियन्त्रण गर्न सक्नु पर्छ । मन नियन्त्रित भएन भने विचार

पनि नियन्त्रित हुन सक्दैन् र अहङ्कार  घमण्ड बढ्दै जान्छ। लोभ र मोह पनि बढ्दै जान्छन् । तसर्थ  शुद्ध मन र शुद्ध विचार बनाउने हो भने लोभ, मोह र अहङ्कारलाई त्याग्न आवश्यक छ ।

अष्टावक्रले मनलाई सूक्ष्मरुपले अध्ययन गरेका छन् । उनले गृहस्थीको मन र साधु सन्यासीको मनलाई पनि अध्ययन गरेका छन् । गृहस्थी लोभ, मोह(माया) क्रोधमा दौडन्छन् । जब व्यक्ति दौडन्छ, उसले ज्ञान प्राप्त गर्न सक्दैन । जब उ रोकिन्छ, अनि उसको मन शान्त हुन्छ, मन शान्ति भएपछि ज्ञान प्राप्त हुन्छ। साधु, सन्त र सन्यासीहरु भौतिक संसारमा त दोडनु हुन्न तर आध्यात्मिक संसार अथवा सूक्ष्मजगतमा बढी दौडनुहुन्छ । मुक्तिको आशमा दौडनुहुन्छ। तनावमा रहनुहुन्छ। त्यसैले ज्ञान प्राप्त हुँदैन । जबसम्म मन रोकिदैन र मनमा शान्ति हुँदैन तबसम्म ज्ञान प्राप्त हुँदैन । उम्लिएको मनबाट ज्ञान प्राप्त हुँदैन भन्नुहुन्छ अष्टावक्र । चाहे भौतिक वस्तुमा होस चाहे आध्यात्मिक जगतमा, मन दौडिरहे सम्म अशान्त हुन्छ। मनलाई पूर्ण विराम लगाएर रोकेर र शान्त बनाए पछि मात्र ज्ञान प्राप्त गर्न सकिन्छ भन्ने सिद्धान्त प्रतिपादन गर्नुभयो । गौतम बुद्धको मन अध्यात्मिक रुपमा धेरै दौडियो । ज्यादै दुःख, कष्ट र तनावपूर्ण जीवन विताउनु भयो तर पनि ज्ञान प्राप्त भएन । जब उनको अध्यात्मिक दौड रोकियो मनलाई रोक्नुभयो र शान्त बनाउनुभयो तब ज्ञान प्राप्त गर्नुभयो । आध्यात्मिक दौडमा लागेर हाड छाला मात्र बाँकी रहदा समेत उनले ज्ञान प्राप्त गर्न सक्नुभएन । धेरै त्याग गर्नुभयो तरपनि ज्ञान प्राप्त भएन । जब सुजाताले दिएको खीर खानुभयो मनलाई रोक्नुभयो र शान्तसँग ध्यानमा बस्नुभयो तब ज्ञान प्राप्तभयो । त्यसैले यो अनुभव सिद्धभयो । राजा जनक पनि शास्त्रार्थको दौडमा लाग्नुभयो। मुक्तिको आशमा दौडनुभयो तर ज्ञान प्राप्त गर्न सक्नुभएन। जब राजा जनकले आफ्नो शरीर, मन, बुद्धि सबै अष्टाबक्रमा समर्पण गर्नुभयो र दौडिने मनलाई रोकेर बस्नुभयो त्यस पछि ज्ञान प्राप्त भयो । महावीरमा पनि त्यही लागु भयो ।

आदि शंकराचार्यले भन्नुहुन्छ "ब्रह्म सत्य जगत मिथ्या" अथवा एउटा ब्रह्म मात्र सत्य हो । सबै जगत चाँहि झुठा हो तर अष्टावक्र अद्वैतवादी हुँदा हुँदै पनि जीव र जगतलाई पनि आत्मामय नै देख्नु हुन्छ । उहाँ जो नित्य छ त्यसलाई सत्य र अनित्यलाई असत्य मान्नुहुन्छ। जीव र जगतलाई इन्द्रजाल भन्दा भन्दै पनि आत्मामय नै देख्नुहुन्छ। जगत र जीव

सबै आत्मामय देख्नुभयो । राजा जनकले आत्माबाहेक अरु केही देख्नुभएन । उनका अनुसार जीव र जगत आत्माका बाह्य स्वरुप हुन् । त्यसैले यिनीहरु सार्थक छन् । सार्थक र निरर्थक मानिसको दृष्टिमा छ, वस्तु र संसारमा होइन ।

आफूमै परमात्मा र परमात्मा मै आफू-अहंम ब्रह्मस्मि अथवा "म स्वयं ब्रह्म हुँ ।" सृष्टि विश्वमा पनि आत्मा मात्र देख्नुहुन्छ । उनी पहिला स्थूल जगतलाई मात्र जगत मान्थे तर अब स्थूल र सूक्ष्म दुवै जगतलाई उनी आत्मा नै मान्छन् । यदि मानिस आफै परमात्मा हो भने परमात्मालाई किन मान्नु? किन भक्ति गर्नु? परमात्मा त ऊ आफू नै हो । राजा जनकले सबै जीव जगतलाई आत्मामय देख्नुभयो । यिनीहरुको छुट्टै अस्तित्व छैन भन्नुभयो । वहाँले आत्माको एकत्व देख्नुभयो ।

## अष्टावक्रगीता र समर्पणको दर्शन

अष्टावक्रगीतामा समर्पण अनिवार्य छ । जब राजा जनकले सम्पूर्ण शरीर, मन, बुद्धि, अहङ्कारलाई श्री अष्टावक्रमा समर्पण गर्नुभयो तब उनी न त राजा रहे न त उनमा राजाको अहङ्कार नै रह्यो । यो जे छ त्यो मेरो केही पनि होइन भन्ने बोध भयो । जसले म जीव हुँ भन्ने अहङ्कार गर्दछ त्यो सत्य होइन । यो आत्मा तत्वबाट फरक छ भन्नु नै बन्धन हो । लोभ, मोह, अहङ्कार सबै आत्माबाट उत्पत्ति भएका होइनन् ।

भगवतगीतामा योग, ध्यान, उपासना, भक्ति आत्मा साक्षात्कारको लागि नभई नहुने पूर्वसर्त नै हुन् । योग, ध्यानले आन्तरिक अपवित्रताहरु हटाउँछ । उपासना र भक्तिले व्यक्तिलाई भगवानको नजिक पुऱ्याउँछ । यस अर्थमा योग, ध्यान, उपासना र भक्ति आत्मा साक्षात्कारको लागि अनिवार्य छन् तर अष्टावक्र गीता विल्कुलै तार्किक छ, यसले भन्छ योग, ध्यान, उपासना आन्तरिक स्वच्छताका लागि मात्र हो । जसको मन शुद्ध छ भने ती क्रियाकलाप जरुरत छैन । फेरि योग, ध्यान कसैले कर्म नमानी गर्दा त ठीकै छ तर जब त्यही क्रियाकलापलाई कसैले कर्मको रुपमा गर्छ भने त उ कर्मबन्धनमा पर्छ । कर्म बन्धनबाट मोक्ष सम्भव छैन । तसर्थ योग, ध्यान, उपासना आन्तरिक शुद्धताका लागि गरिन्छन् र यीबाट ज्ञान मार्गमा यात्रा हुन्छ भने त ठीकै छ । यदि योग, ध्यान र उपासना ज्ञानका लागि गरिन्छ

भने त्यो ठीक छ, अन्यथा कर्म बन्धनमै पर्छ । तसर्थ अष्टावक्रगीता भगवतगीता भन्दा एक कदम अगाडि छ ।

## अध्यात्मिक विकासको दृष्टिकोणमा अष्टावक्रगीता

भगवतगीता र अष्टावक्रगीता दुई फरक अध्यात्मिक अवस्थामा छन् । दुवै सगरमाथा (मुक्ति) को आरोहण गर्दैछन् । भगवतगीता तेस्रो शिविरमा छ भने अष्टावक्रगीता चाहि सातौं शिविरमा । अष्टवक्र गीताले सगरमाथा विजय गर्ने दुईवटा मात्र शीविर पार गर्नुपर्छ त्यो हो ज्ञान र मोक्ष भने भगवतगीताले कर्म, सन्यास, ज्ञान र मुक्तिका शीविर, त्यसैले यी दुई फरक फरक अवस्थाका उपाशक उपाशिकाको लागि हो । भगवतगीता लोभ, मोह र दोषबाट मुक्त हुन सर्बसाधारणका लागि दिइएको सन्देश हो भने अष्टाबक्र गीता चाँहि विसिष्ट अवस्थामा (लोभ, मोह बाट मुक्त) भएका ज्ञानी राजालाई दिइएका सन्देश हुन् ।

भगवतगीता लोभ, मोह, क्रोध भएका व्यक्तिहरुका लागि उपयोगी छ भने जोसंग लोभ, मोह र क्रोध छैन अथवा अति कम छ(साधु सन्त) त्यस्ता ब्यक्तिका वा  ज्ञान मिमांशका लागि अष्टावक्रगीता उपयोगी छ । यी दुवै उत्तिकै लाभदायक छन् । यी दुई फरक आध्यात्मिक विकासको चरणमा दिइएका सन्देश हुन् । स्नातक तहका विद्यार्थीका लागि भगवतगीता हो भने स्नातकोत्तर तहको लागि अष्टाबक्रगीता  ।

## अष्टावक्रगीता र उनको तेश्रो मार्ग

अष्टावक्र मध्यममार्गी हुन् । न त उनी चार्वाकको जस्तो भोगी मार्ग ठीक देख्छन, न त कपीलको त्यागी मार्ग । वहाँले तेश्रो मार्ग तयार गर्नुभयो । वहाँ त्यागी मार्गलाई पनि ठीक देख्नुहुन्न । न त भोगी मार्गबाट ज्ञान प्राप्तहुन्छ न त त्यागी मार्ग(संन्यास) बाटै । ज्ञान प्राप्त त तब हुन्छ जब व्यक्ति न त भोक्ता हुन्छ न त त्यागता । ज्ञान तब प्राप्तहुन्छ जब व्यक्ति सृष्टिको साक्षी बनेर अथवा प्रतिक्रिया बिना अवलोकन (observation) गरेर बस्छ । केवल साक्षी बनेर मात्र सम्पूर्ण विश्वलाई हेर्छ ।

बुद्धले सबै दरवारीया सुख सुविधाको त्याग गरेर ज्ञान प्राप्त गर्न ध्यान गरेर बस्नुभयो । तर त्यो त्यागबाट ज्ञान प्राप्त भएन । अनिश्वरवादी चार्वाकवादीले र यायतिले भोग मार्ग अबलम्बन गर्नुभयो तर पनि ज्ञान प्राप्त

भएन । ज्ञान तब प्राप्त हुन्छ जब उ न भोक्ता हुन्छ न त त्यागता नै । ज्ञान प्राप्त गर्न अध्यात्मिक र भौतिक दुबै दौड रोक्नु पर्छ ।

भगवतगीता बढी कवितात्मक छ, थोरै अमूर्त पनि छ । त्यसैले हरेक व्याख्याताले आफ्नो अनुकुल व्याख्या र विश्लेषण गर्ने गरेका छन् । अर्को तर्फ अष्टावक्रगीता चाँहि सरल निबन्ध हो । यसले चाँहि सिधै शिक्षा दिने गरेको छ । यसमा मिठास छैन । यसले वेदान्तमाथि औलो ठड्याएको छ । प्राचीन ज्ञान आर्जन गर्ने पद्दति साङ्ख्यका ध्यान, प्राणायाम योग जस्ता महत्वपूर्ण साधनालाई केवल आन्तरिक स्वच्छता कायम गर्ने साधनाको रुपमा मात्र लिएको छ अथवा उनी यिनीहरुलाई ज्ञान आर्जन गर्ने क्रममा सहायक तत्वमात्र मान्छन्, मूलतत्व मान्दैनन् । मुक्तिको लालचा माथि सिधै प्रहार गर्नु हुन्छ अष्टावक्र । त्यसैले कतिपय आधुनिक ऋषि महर्षिहरुका लागि अष्टाबक्र गीता त्यति रुचिकार छैन । अष्टावक्र कसैलाई खुशी गराउनेतिर लाग्दैनन् । बरु एकपछि अर्को सत्य उजागर गर्दै जान्छन् । कसैलाई रुचिकर होस् वा नहोस् उनी पर्वाह गर्दैनन् । उनले आफ्ना वावु कहोडलाई त गर्भैबाट सावधान गराए भने अरुको के पर्वाह ।

मनुष्यले ज्ञान प्राप्त गर्नु छ भने उसले आफूलाई साक्षीको रुपमा मात्र प्रस्तुत गर्नुपर्छ । उसले कुनै प्रतिक्रिया जनाउनु हुँदैन । जसरी समुद्रमा छालहरु आउछन्, त्यस्तै गरी मानव मस्तिष्कमा पनि धेरै छालहरु आउँछन् । त्यस्ता छालहरु स्थूल जगतका पनि हुन्छन्, सूक्ष्मजगतका पनि हुन्छन् । यसमा केवल साक्षी मात्र बन । त्यसमा तिमी कर्ता पनि नबन र भोक्ता पनि नबन । जसरी अंश दिने बाबु कर्ता हो । अंश पाउने छोरा भोक्ता हो किनकि छोराले त्यो सम्पत्तिको उपभोग गर्दछ । त्यो कारोबारमा जो साक्षी बस्छ त्यो न त कर्ता हो न भोक्ता नै । उ त केवल अवलोकन गर्ने व्यक्ति मात्रै हो । उसले ती बाबु छोराको कारोबारमा कुनै प्रतिक्रिया दिदैनन् । ठीक त्यसैगरी हाम्रो मनमा स्थूल र सूक्ष्मजगतका धेरै कारोवारका छालहरु आउँछन् तर त्यसमा प्रतिक्रिया जनाउनु हुँदैन । केवल साक्षी मात्र बन्दा मनमा एक प्रकारको छुट्टै आनन्दको अनुभूति हुन्छ । जब आफू कर्ता वा भोक्ता सम्झन्छ र अरुलाई साक्षी मान्छ त्यसपछि समस्याहरु आउँछन् । ऊ सुख र दुःखको भवसागरमा पर्छ । जब अरु कर्ता र आफू साक्षी सम्झन्छ तब उसले छुट्टै किसिमको आनन्द प्राप्त गर्छ । जब स्थूल र सूक्ष्मजगतका हरेक क्रियाकलापमा आफू कर्ता वा भोक्ता सम्झन्छ र त्यही अनुसार क्रिया र

प्रतिक्रिया जनाउन थाल्छ । तब सुख र दुःख मात्र प्राप्त हुन्छ । साक्षी भनेको तटस्थ व्यक्ति हो । जीव र जगत परिवर्तन भइरहन्छन्, त्यसको भोक्ता पनि नसम्झने र कर्ता पनि नसम्झने हो भने उ तटस्थ हुनपुग्छ जब व्यक्ति कर्ता र भोक्ता दुवैबाट टाढा बस्छ भने उसको मन शितल र शान्त हुनपुग्छ । भगवतगीतामा कर्तामा अकर्ता बन्ने जुन सन्देश छ त्यो त राम्रै हो तर यसमा व्यक्ति भोक्ताको रुपमा रहन्छ तर अष्टावक्रगीतामा व्यक्ति भोक्ता पनि रहदैन । केवल साक्षी मात्र बनी सूक्ष्मजगत र स्थूल जगतको अवलोकन गर्छ । कुनै क्रिया प्रतिक्रिया जनाउँदैन । जसरी महासागरबाटै छालहरु उठ्छन् र महासागरमै मिल्छन् ठीक त्यसैगरी हामी पनि आत्माबाट उत्पन्न हुन्छौं र आत्मैमा मिल्छौं पनि । न त्यो त्याग हो, न ग्रहण, न त विलय नै । जति पनि सृष्टि छन्, ती सबै आत्माबाट सृजना भएका हुन् र आत्मैमा गएर मिल्छन् । आत्माको अवलोकन गर्दा गर्दै राजा जनक पनि महासागर जस्तै अनन्त बन्न पुग्छन् । जसरी आत्माको कुनै इच्छा हुँदैन त्यस्तै गरी आत्मा दर्शनपछि राजा जनकमा पनि कुनै ईच्छा पलाएनन् । उनी अब मनबाट सञ्चालन नभएर आत्माबाट सञ्चालन हुनपुग्नु भयो । उनको आत्माले मनलाई पूर्ण नियन्त्रण गऱ्यो ।

आत्मा दर्शन पछि राजा जनकले न कुनै चीज पाउनुभयो न गुमाउनु नै भयो । न त वृद्धि नै भयो न क्षति नै । व्यक्ति नै आत्मामय भएपछि आत्मा झै न त त्यसको वृद्धि हुन्छ न त क्षति नै । न प्राप्त हुन्छ न गुम्छ । राजा जनक भन्नुहुन्छ न त बर्षा हुँदा, न त खडेरी पर्दा महासागरमा अन्तर देखिन्छ ठीक त्यस्तै राजा जनकमा पनि न वृद्धि हुन्थ्यो न त क्षति नै । उनी स्वयं आत्मामय बन्नुभयो । आत्मा सर्वत्र छ । स्वतन्त्र छ र निष्प्रभावी छ ।

आत्मामा न त मोह हुन्छ न त आशक्ति नै हुन्छ । प्रवृति मार्गका यात्रीहरु भन्नुहुन्छ, भोगबाटै मुक्ति सम्भव छ । प्रारब्धकै कारण यो जीवन मिलेको छ । त्यसैले यी कर्महरुको भोग विना मुक्ति सम्भव छैन । आत्मज्ञानीले पनि प्रारब्ध त भोग्नु नै पर्छ । अर्कोतिर निवृत्ति मार्गमा लागेका व्यक्तिहरु सांसारिक कर्महरु छोड्न प्रयास गर्नु हुन्छ । त्यस्ता व्यक्ति भित्र धेरै काम वासना, तृष्णा भए पनि आशक्ति भए पनि उनीहरु ती बाहिर चाहिँ नदेखाउने हुन्छन् । ती त पाखण्डी हुन् । अर्कोतिर प्रवृत्ति मार्गमा लागेका भन्छन् निवृत्त हुनु अगावै कर्मको भोग गर्नुपर्छ र सन्तुष्ट हुनुपर्छ । त्यसपछि मात्र मुक्ति सम्भव छ तर निवृत्ति मार्गका व्यक्तिहरु भन्नुहुन्छ जति भोग्छौं

त्यति नै बढी वासनाप्रति आकर्षित हुन्छौं, त्यसैले कर्मयोग छोड्नु पर्छ । अष्टावक्र भन्नुहुन्छ प्रवृति मार्गबाट राग उत्पन्न हुन्छ भने निवृत्तिबाट द्वेष उत्पन्न हुन्छ । दुवै बन्धनका कारण हुन् यसकारण अष्टावक्रले तेस्रो मार्ग तयार गर्नुभयो र भन्नुभयो मानिसले वालक जसरी नै सरल भएर कर्म गर्दै रहनु पर्छ । अथवा भोक्ता वा त्यागताबाट तटस्थ रही केवल साक्षी बनी कर्म गरियो भने न राग बढ्छ न त द्वेष नै ।

लोभ त मानिसले विस्तारै हटाउन सक्छन् । त्यी व्यक्तिहरु पनि रागी हुन् जसले सांसारिक कर्महरु त्याग्छन् । छोरा, छोरी, धन सम्पत्ति त्यागेर मानिस सुखी हुन सक्दैन । उसलाई जंगलमा शान्ति प्राप्त हुँदैन । राग र द्वेषबाट टाढा रहनु नै सुख र शान्ति प्राप्त गर्नु हो । अष्टावक्रगीता यसरी उडेको छ यसले आत्मा बाहेक केही देख्दैन । यो स्थूल जगत पनि आत्मा कै बाहिरी स्वरुप ठान्छ । जीवमा पनि आत्मा नै देख्छ । जगतमा पनि आत्मा नै देख्छ । सूक्ष्म जगतमा पनि आत्मा नै देख्छ । राजा जनकले सम्पूर्ण जगतलाई र जीवलाई पनि आत्माकै बाहिरी रुप देख्नुभयो। जसरी धेरै उचाईमा हवाई जहाजमा उड्दा आकाश बाहेक केही देखिदैन ठीक त्यही किसिमले राजा जनकले पनि आत्माबाहेक केही पनि देख्नुहुन्न । आकाशको सीमा नभए जस्तै आत्माको पनि सीमा देख्नुहुन्न । उनमा न त सुखको अनुभूति छ न दुखको नै । उनी आफै पनि आत्मामय हुनु भएको छ । जसरी आत्मा सुख दुःखबाट मुक्त छ, त्यस्तै आत्मज्ञानी राजा जनक पनि सुख दुःखबाट मुक्त हुनु भएको थियो । कर्ता पनि नबन्ने, भोक्ता पनि नबन्ने र त्यागता नबन्ने नै उनको तेश्रो मार्ग हो ।

## अर्थशास्त्रीय दृष्टिकोणमा अष्टावक्रगीता

अर्थ शास्त्रीय दृष्टिकोणले अष्टावक्रगीता हेर्दा यो अचल छ । यसले सत्यको उत्पादन र भ्रमको निवारण गरेको पाएँ । अष्टावक्रको उत्पादन भनेको ज्ञानको उत्पादन हो, प्रज्ञाको उत्पादन हो । उनी सापटी लिएको ज्ञानमा थोरै मात्र विश्वास गर्थे । मनलाई वेगवान भई उड्नबाट रोक्थे । शास्त्रीय मान्यता अथवा वेदमा जे छ त्यो सबै सत्य हो भन्ने परम्परागत धारणा हटाई चिन्तन, मनन, मन्थन, निर्याशनबाट कसी लगाएपछि मात्र उत्पादन गरेको ज्ञानलाई वितरण गर्थे । त्यसैकारण उनी ठूलो आध्यात्मिक उर्जा उत्पादन गर्न सक्षम हुनुभयो । त्यो उर्जाले आचार्य बन्दीलाई मात्र नभएर समग्र मानव जातिको कल्याण गऱ्यो । धेरै आचार्यहरुले जल समाधि

लिनु परेन । यसले ब्राह्मणहरुको लोभ र मोहलाई  पनि कम गर्‍यो । राजा जनकको अहङ्कारलाई पनि हटाइदियो । धनको आडम्बरबाट सुनले सिंग मोहरेका १००० गाई दिन्छु भन्ने जुन आडम्बर जनकको मनमा नजानिदो तरीकाले डेरा जमाएर बसेको थियो, मन, बचन र कर्म सबै अष्टावक्रमा समर्पण गर्ने वित्तिकै आडम्बर भस्म भयो ।अष्टावक्रको खुट्टामा झुक्ने बित्तिकै जनकको  राजा हुँ भन्ने आडम्बर पनि भस्म भयो । त्यसपछि मात्र अष्टावक्र र राजा जनकको सम्वाद मार्फत ज्ञानको उत्पादन हुन्छ ।

वैज्ञानिक रुपले हेर्दा अष्टावक्रगीता अनुभवसिद्ध अथवा प्रमाणित ग्रन्थ हो । उनले प्रतिपादित सिद्धान्तहरु अथवा ज्ञान कसीमा जाँचेर मात्र ठीक र बेठीक भन्नुभयो । वेदलाई पनि उनले अन्ध समर्थन गर्नु भएन । अनुभवबाट प्रमाणित भयो भने स्वीकार्य भयो । अनुभव सिद्ध भएन भने त्यसलाई लिनु भएन । उपनिषदहरु हिड्छन् । भगवतगीता चाँहि दौडिन्छ तर अष्टावक्रगीता चाँहि उडछ । अष्टावक्रगीताले गुणात्मक र मात्रात्मक फरक पार्छ । यस अर्थमा हेर्दा अष्टावक्रगीताको गतिशीलता बढी छ । बुद्धलाई परिनिर्वाण प्राप्त गर्न ६ वर्ष लाग्यो । भगवतगीतालाई अनुकरण गर्दा बर्षौं बर्ष लाग्छ । त्यो पनि आत्मा साक्षात्कार हुन गाह्रो छ तर राजा जनकले ३।४ दिन मै मुक्ति प्राप्त गर्नुभयो । अष्टावक्र गुरुको प्रशिक्षणमा राजा जनकले केही दिन मै मुक्ति प्राप्त गर्नुभयो ।

## रोकथाम र उपचारको दृष्टिकोणमा अष्टावक्रगीता

मन र हृदयमा अपवित्रा हटाउनका लागि समाधिमा रही ध्यान गर्ने सन्देश कृष्णले दिनुहुन्छ । बुद्धको सन्देश पनि त्यही हो । यसले अपवित्र मन र हृदयको उपचार गर्छ । अपवित्राहरु उपचारबाट(समाधिबाट) भष्म गराइन्छ । यसले रोगी मन र हृदयको उपचार गर्छ । अर्को तर्फ अष्टावक्रगीता चाहीँ मन र हृदयमा अपवित्रता पस्नै दिनु हुँदैन भन्ने पक्षमा हुनुहुन्छ । उपचार भन्दा रोकथाम उत्तम । हिलो कुल्चेर खुट्टा सफा गर्नु भन्दा हिलो नकुल्चिनु नै वेश । मानिस लोभ, मोह र द्वेषमा नपर्ने हो भने उसको मन र हृदय सधैं कन्चन हुन्छ । सधैं बच्चाको जस्तो मन हुन्छ । अपवित्रता नै छैन भने किन त्यसलाई हटाउन साधना गर्नुपर्‍यो । चिकित्सा विज्ञानको रुपमा हेर्दा अष्टावक्र कुशल चिकित्सक हुन् । उनले जनक भित्रको लोभ, मोह, द्वेष, आडम्बर र अज्ञानतालाई राम्ररी अध्ययन गरे । उनमा लोभ, मोह र द्वेष थिएन । जनक ज्ञानका पारखी थिए । यति हुँदा– हुँदै पनि उनमा म राजा

हुँ भन्ने थोरै आडम्बर थियो जुन अष्टावक्रसँगको प्रथम संवाद मै चकनाचुर भयो । जल समाधि दिलाउने र ब्राह्मणलाई कारागारमा बन्द गर्ने त्यही आडम्बर कै कारण भएको थियो जुन अष्टावक्रको अहङ्कार  छोड भन्ने सन्देशले चकनाचुर भयो। अब बाँकी रहयो ज्ञानको। अष्टावक्रले ज्ञान प्राप्त गर्ने जुन बाटो देखाउनुभयो । क्षमा, दया, उदारता, सन्तत्व (वैराग्यता), सत्यता र सरलताको ज्ञान दिनुभयो त्यसबाट उनको मन अझ कन्चन भयो ।

तसर्थ अष्टावक्रको निदान सही ठहर्‍यो । अब रह्यो उपचारको । बन्दीलाई जल समाधिको दण्ड माफी दिनु, उनको क्षमाशीलता हो, यसबाट तत्कालिन आध्यात्मवादी सूक्ष्मसंसारमा उर्जा थपियो। सिङ्गमा सुन मोहरेका १००० गाई पुरस्कार समेतको त्यागले उनी लोभी नभएको  प्रमाणित गर्छ । वन्दीप्रतिको प्रतिशोधको बदलामा दयाको कारण अष्टावक्रको मात्र हैन, त्यो आध्यात्मिक उर्जाले राजा जनक भित्रका विषयहरुलाई भष्म बनाई दियो । अथवा राजा जनकलाई पनि राम्रो उपचार प्रदान गर्नुभयो । साथ साथै मनलाई मुठीभित्र राख्ने अष्टावक्रको सन्देशले विषयहरुको रोकथामको काम गर्‍यो भने आडम्बरलाई छोड भन्ने सन्देशले उपचारको काम गर्‍यो । माथि व्याख्या गरे अनुसार भगवतगीतामा उपचारात्मक कुरा धेरै, रोकथामका कुरा थोरै छन्, भने अष्टावक्रमा दुवैको समिश्रण छ अथवा दुवैको समन्वय अति राम्रो छ। जब हृदयमा विष हुन्छ भने त्यहाँ जति नै अमृत खन्याए पनि त्यो विषमा रुपान्तरण हुन्छ। पहाडमा पानी परे पनि पानी अडिदैन्, बिष भएको भाडोमा जति नै अमृत खन्याए पनि बिष नै हुन्छ । यस अर्थमा अष्टावक्रगीताको पहिलो अध्याय आयुर्वेद शास्त्रको पञ्चकर्म हो जसले सारा अपवित्रता, विकार प्रदुषणलाई सफा गरिदिन्छ। सबै बिषयहरु पखालिन्छन् र मन सफा हुन्छ। त्यसपछि उपचारका अरु सूत्रहरुको प्रयोग हुन्छ। जब मन कंचन हुन्छ त्यहाँ अमृत रहन्छ। अष्टावक्रगीतामा अनुगमन (फलोअप) को व्यवस्था छ । आचार्य वन्दी माथिको क्षमा उनीप्रति देखाइएको दया र सरल व्यवहारले बन्दीको मनमा आएको परिवर्तनको फलोअप (follow up) पनि भईरहेको थियो ।

यदि राजा जनकको बदला म देवीप्रसाद भएको भए म लोभ, मोह र क्रोधमा हुन्थे। मेरो मन आशक्तिमा हुन्थ्यो। त्यस्तो अवस्थामा अष्टावक्रको प्रेस्कृप्सन (सल्लाह) र सूत्र फरक हुन्थ्यो । उनले भन्ने थिए दान गर, यज्ञ (

त्याग) गर, ध्यान गर, मोह छोड आदि आदि । अथवा त्यो प्रेस्कृप्सन ( सल्लाह) चाही भगवतगीता हुने थियो होला ।

यति हुँदा हुदै पनि अज्ञानी वा मूर्खले अकर्म गरे पनि कर्म हुने र ज्ञानीले कर्म गरे पनि अकर्म हुने जुन कुरा छ, त्यो मलाई बुझ्न गाह्रो भयो । आत्मामा चित्त राखी ज्ञानीले कर्म गर्छ भने त अकर्म हुन्छ तर त्यो त कर्म भएन अकर्म नै भयो । ज्ञानी समाधिमा नबसे पनि समाधिमै बसेको हुन्छ कारण उसको मन ब्रह्ममा वा आत्मामा नै रहेको हुन्छ र उसको चित्तवृति निरोध भएको हुन्छ । यहाँ सम्म त ठीक छ तर मूर्खले अकर्म गरे पनि कर्म हुने र समाधिमा बसे उभित्र अहङ्कार भएकाले ती कर्महरु काम लाग्दैनन् भन्ने जुन कुरा छ त्यो कुरा बुझ्न सकिन । मूर्खले गरेको अकर्म पनि कर्म हुन्छ भन्दा म मूर्ख त सधै बन्धनमा नै हुने भए भन्ने चिन्ता उत्पन्न भयो । म आफू पनि मूर्ख, सधै मूर्ख नै हुने भएँ कहिल्यै पनि ज्ञानी नहुने भएँ जस्तो लाग्यो । के म मूर्ख सधै मूर्ख नै हुन्छु त ? भगवतगीतामा समभाव छ, चण्डाल र ज्ञानी बीच अन्तर छैन, ज्ञानी पुग्ने ठाँउमा चण्डाल पनि पुग्नसक्छ भन्ने कुरा छ, उसले पनि अकर्म गर्नसक्छ भन्ने कुरा छ । मूर्ख पनि ज्ञानी हुनसक्छ भन्ने कुरा छ, मेरो विचारमा त्यो ठीक हो । अहङ्कारी, उद्विग्न चित्त भएको मूर्खले पनि बिस्तारै चित्तवृति निरोध गर्नसक्छ । चित्त शुद्ध गर्नसक्छ । उसले पनि बह्मज्ञान प्राप्त गर्न वा अनुभव गर्न सक्छ । ज्ञानी पुग्ने ठाँउमा पनि पुग्न सक्छ । उदाहरणका लागि कालीदास, अलाभक, आम्रपाली, रत्नाकर क्रमशः मूर्ख, ह्रिंसक, विलासी वेश्या र डाकु पनि ज्ञानी भए । जुन मूर्ख र अहङ्कारीले शान्ति प्राप्त गर्न वा अनुभव गर्न सक्दैन भन्ने कुरा छ त्यो बुझिन । मूर्ख र, अहङ्कारीले पनि समाधिमा बसेमा शान्ति प्राप्त गर्न सक्छ, समय बढी लाग्न सक्छ तर पनि ज्ञान प्राप्त गर्न सक्छ । वास्तवमा ज्ञानले नै मूर्ख, अहङ्कारी, ह्रिंसक, विलासी वेश्या, र डाकालाई ज्ञानीमा बदल्छ । यो नै अशान्तलाई शान्तमा बदल्ने औषधि हो । ज्ञान प्राप्त हुदै गएपछि मूर्ख, अहङ्कारी, ह्रिंसक, विलासी वेश्या र डाका पनि समाधिमा बस्न सक्छन् । बह्मज्ञान प्राप्त गर्न पनि सक्छन् । यो मान्यता मेरो अल्पज्ञानको परिचायक हुनसक्छ । ज्ञान प्राप्त भए पछि त मूर्ख पनि ज्ञानी भै हाल्यो नि । त्यो मूर्ख भएन, ज्ञानी नै भयो । त्यस अर्थमा अष्टावक्रले भनेको हुनुपर्छ । ज्ञानी भएपछि उनीहरुको मन बह्ममा नै बस्छ । मैले बुझेका कुरा जानी नजानी विद्धान समक्ष प्रस्तुत गरेको छु । बिस्तृत तपशिलमा दिइएको छ ।

# प्रकरण १
# गुरुक्तात्मा अनुभव

जनक उवाच ॥

कथं ज्ञानमवाप्नोति कथं मुक्तिर्भविष्यति ।
वैराग्यं च कथं प्राप्तं एतद् ब्रूहि मम प्रभो ॥ १-१॥

**भावार्थ**ः प्रभू ज्ञान कसरी प्राप्त हुन्छ ? मुक्तिको उपाय के छ ? वैराग्य कसरी प्राप्त गर्न सकिन्छ भनी राजा जनकले महाज्ञानी अष्टावक्रलाई सोध्नु हुन्छ ।

मुक्तिं इच्छसि चेत्तात विषयान्विषवत्त्यज ।
क्षमार्जवदयातोषसत्यं पीयूषवद् भज ॥ १-२॥

**भावार्थः** अष्टावक्रले राजा जनकलाई उत्तर दिदै भन्नुहुन्छ, तिम्रो मुक्तिको कामना तब पुरा हुन्छ जब तिमीले विषयहरुलाई विष सरह त्याग्छौ र क्षमा, उदारता, दया, सन्तोष तथा सत्यलाई अमृत स्वरुप पान गर्छौ ।

न पृथ्वी न जलं नाग्निर्न वायुर्द्यौर्न वा भवान्।
एषां साक्षिणमात्मानं चिद्रूपं विद्धि मुक्तये ॥ १-३॥

**भावार्थः** तिमी पृथ्वी, जल, अग्नि, वायु र आकाश होइनौं । अथवा पंचतत्वले बनेको शरीर होइनौं । तिमी मुक्ति पाउन चाहन्छौं भने म आत्मा नै हुँ भन्ने मान । तिमी त पंच तत्वको साक्षी स्वरुप मात्र हौं । आफूलाई पंच तत्व नसम्झ ।

यदि देहं पृथक् कृत्य चिति विश्राम्य तिष्ठसि ।
अधुनैव सुखी शान्तो बन्धमुक्तो भविष्यसि ॥ १-४॥

**भावार्थः** यदि तिमीले आफूलाई शरीरबाट अलग गऱ्यौ भने र चित्तलाई विश्राम दियौ भने तत्काल सुखी, शान्त र बन्धनमुक्त हुन्छौं ।

न त्वं विप्रादिको वर्णो नाश्रमी नाक्षगोचरः ।
असङ्गोऽसि निराकारो विश्वसाक्षी सुखी भव ॥ १-५॥

**भावार्थः** तिमी ब्राहमण आदि कुनै वर्णका होइनौं, न त तिमी कुनै आश्रम हौं, न दृष्टिगोचर हौं । तिमी आफू असँग (non attachment) अथवा कसैका सँगमा छैनौं । तसर्थ आफूलाई निराकार मानेर सुखी रहौं ।

धर्माधर्मौ सुखं दुःखं मानसानि न ते विभो ।
न कर्तासि न भोक्तासि मुक्त एवासि सर्वदा ॥ १-६॥

**भावार्थः** धर्म र अधर्म, सुख र दुःख मनका उपज मात्र हुन् । न तिमी कर्ता हौं, न भोक्ता नै । तिमी त सधै मुक्त हौं । यहाँ तिमी भनेको आत्मा हो, त्यो न कर्ता हो न भोक्ता नै ।

एको द्रष्टासि सर्वस्य मुक्तप्रायोऽसि सर्वदा ।
अयमेव हि ते बन्धो द्रष्टारं पश्यसीतरम्॥ १-७॥

**भावार्थः** एक तिमी नै सबैको दृष्टा हौं र सर्वदा मुक्त रहेका छौ तर तिमी आफू स्वयंलाई दृष्टा नमानेर अरुलाई द्रष्टा मान्छौं, त्यसैले तिमी सांसारिक बन्धनमा फस्दछौं ।

अहं कर्तेत्यहंमानमहाकृष्णाहिदंशितः ।
नाहं कर्तेति विश्वासामृतं पीत्वा सुखी भव ॥ १-८॥

**भावार्थः** म कर्ता हूँ, यही अहङ्कार कै कारण तिमीलाई कालो सर्पले डस्छ । म कर्ता होइन, त्यो विश्वास लियौं भने अमृत पिएर सुखी हुनेछौं ।

एको विशुद्धबोधोऽहं इति निश्चयवह्निना ।
प्रज्वाल्याज्ञानगहनं वीतशोकः सुखी भव ॥ १-९॥

**भावार्थः** म एउटा विशुद्ध बोध हुँ । यो यस्तो निश्चय रुपी अग्नि हो त्यसैमा घोर अज्ञानतालाई भष्म गरेर तिमी शोकमुक्त भएर सुखी होऊ ।

यत्र विश्वमिदं भाति कल्पितं रज्जुसर्पवत्।
आनन्दपरमानन्दः स बोधस्त्वं सुखं भव ॥ १-१०॥

**भावार्थः** यो विश्व डोरीलाई सर्प देखे जस्तो हो । वस्तुतः तिमी बोध हौं । तसर्थ तिमी आनन्द र परमानन्दको अनुभूति गर र सुखमय विचरण गर ।

मुक्ताभिमानी मुक्तो हि बद्धो बद्धाभिमान्यपि ।
किंवदन्तीह सत्येयं या मतिः सा गतिर्भवेत्॥ १-११॥

**भावार्थः** जो सँग जस्तो मानवीय मति हुन्छ, उसले त्यस्तै गति पाउँछ । जो सँग गौरव भावनाहरु छन्,उसले गौरवमयी गति नै प्राप्त गर्दछ । त्यसैले किंवदन्ति सत्य हुन आउँछ "जस्तो मति उस्तै गति ।"

आत्मा साक्षी विभुः पूर्ण एको मुक्तश्चिदक्रियः ।
असंगो निःस्पृहः शान्तो भ्रमात्संसारवानिव ॥ १-१२॥

**भावार्थः** आत्मा साक्षी, विराट, पूर्ण एक, मुक्त, चेतना, क्रियाहीन असंग, निष्पृह र शान्त हुन्छ केवल भ्रमवश मात्र यो सांसारिक प्रतित हुन्छ ।

कूटस्थं बोधमद्वैतमात्मानं परिभावय ।
आभासोऽहं भ्रमं मुक्त्वा भावं बाह्यमथान्तरम्॥ १-१३॥

**भावार्थः** तिमी कुटस्थ, विशुद्धवोध तथा अद्वैत आत्माको चिन्तन (ध्यान) गर । तिमीले यो भ्रम त्याग कि तिमी उत्पादित बाह्य चेतना हौ । यस्तो भावनालाई भित्र र बाहिर कतै पनि स्थान नदेऊ ।

देहाभिमानपाशेन चिरं बद्धोऽसि पुत्रक ।
बोधोऽहं ज्ञानखंगेन तन्निकृत्य सुखी भव ॥ १-१४॥

**भावार्थः** बाबू तिमी लामो समय देखि देह अभिमानीमा आवद्ध छौं । अथवा पासोमा बाँधिएका छौं । जब सम्म त्यो पासोलाई काट्दैनौं तब सम्म मुक्ति पाउँदैनौ । तसर्थ 'म'लाई बोध गरेर ज्ञानले त्यो पासोलाई काटेर सुखी होऊ ।

निःसंगो निष्क्रियोऽसि त्वं स्वप्रकाशो निरंजनः ।
अयमेव हि ते बन्धः समाधिमनुतिष्ठति ॥ १-१५॥

**भावार्थः** तिमी नि:संग हौं, तिमी स्वयंप्रकाश, निर्दोष, र निरन्जन हौं । जसलाई पाउन तिमी समाधिमा बस्छौं र अनुष्ठान गर्छौं । त्यो नै तिम्रो लागि बन्धन हो ।

त्वया व्याप्तमिदं विश्वं त्वयि प्रोतं यथार्थतः ।
शुद्धबुद्धस्वरूपस्त्वं मा गमः क्षुद्रचित्तताम्॥ १-१६॥

**भावार्थः** तिमी मै विश्व व्याप्त छ । तिमी मै सवै विश्व समाहित छ । तिमी छल प्रपञ्च रहित शुद्ध बुद्ध स्वरुप हौं । त्यसकारण चित्तका क्षुद्र प्रवृतिहरुबाट आफूलाई बचाएर राख ।

निरपेक्षो निर्विकारो निर्भरः शीतलाशयः ।
अगाधबुद्धिरक्षुब्धो भव चिन्मात्रवासनः ॥ १-१७॥

**भावार्थः** तिमी निरपेक्ष है । निराकार हौ । आफै निर्भर हौं । शीतल हौं । अगाध बुद्धि सम्पन्न छौं । क्षुब्धहीन छौं । अतः निष्क्रिय भएर चैतन्य मात्र वन । मानिस आत्माकै रुप भएकाले तिमीसँग ती गुणहरु छन् ।

साकारमनृतं विद्धि निराकारं तु निश्चलम्।
एतत्तत्त्वोपदेशेन न पुनर्भवसम्भवः ॥ १-१८॥

**भावार्थः** साकार रुप कल्पना हो, यो मिथ्या हो । निराकार निश्चल र

विश्वासनीय छ। यो तत्वको उपदेश जसले संझन्छ ऊ आवागमनबाट मुक्त हुन्छ।

यथैवादर्शमध्यस्थे रूपेऽन्तः परितस्तु सः ।
तथैवाऽस्मिन्शरीरेऽन्तः परितः परमेश्वरः ॥ १-१९॥

**भावार्थः** जसरी ऐनाको भित्र र ऐनाको बाहिरको अस्तित्व छ, त्यस्तै शरीरको भित्र र शरीरको बाहिर परमेश्वरको अस्तित्व छ।

एकं सर्वगतं व्योम बहिरन्तर्यथा घटे ।
नित्यं निरन्तरं ब्रह्म सर्वभूतगणे तथा ॥ १-२०॥

**भावार्थः** जसरी सबै विकिरणहरु एउटै आकाशको बाहिर घैटामा र भित्र विद्यमान हुन्छ त्यस्तै प्रकारले ब्रह्म तत्व सबै प्राणीहरुमा विद्यमान हुन्छ।

# प्रकरण २
# शिष्योक्तात्मानुभाव

जनक उवाच ॥

अहो निरंजनः शान्तो बोधोऽहं प्रकृतेः परः ।
एतावन्तमहं कालं मोहेनैव विडम्बितः ॥ २-१॥

**भावार्थः** राजा जनक भन्नुहुन्छ कि यो कति आश्चर्य लाग्दो विषय हो कि म निर्दोष (निरन्जन) हूँ, शान्त हुँ, बोध हूँ र प्रकृतिबाट अलग छु तर कस्तो विडम्वना यतिका समय सम्म म मोहग्रस्त रहे ।

यथा प्रकाशयाम्येको देहमेनं तथा जगत्।
अतो मम जगत्सर्वमथवा न च किंचन ॥ २-२॥

**भावार्थः** जसरी म आफ्नो शरीरको अवलोकन गर्छु । त्यसै प्रकारले म जगत र जडको पनि अवलोकन गर्छु । सत्य यो हो कि सबै जगत मेरो नै हो । यसको कुनै अस्तित्व छैन् आत्माकै स्वरुप हो ।

स शरीरमहो विश्वं परित्यज्य मयाधुना ।
कुतश्चित्कौशलाद् एव परमात्मा विलोक्यते ॥ २-३॥

**भावार्थः** आफ्नो अत्यन्त कुशलताबाट यस्तो आत्मज्ञान दान दिनुभयो कि मैले शरीर साथ विश्वको त्याग गरेर परमात्मालाई साक्षात रुपमा देखिरहेको छु ।

यथा न तोयतो भिन्नास्तरंगाः फेनबुद्बुदाः ।
आत्मनो न तथा भिन्नं विश्वमात्मविनिर्गतम्॥ २-४॥

**भावार्थः** जसरी पानीबाट तरंग, पानीका फोका र बुलबुल भिन्न होइन त्यस्तै आत्माबाट विश्व पनि भिन्न होइन । विश्व पनि आत्माबाटै उत्पन्न हुन्छ ।

तन्तुमात्रो भवेद् एव पटो यद्वद् विचारितः ।
आत्मतन्मात्रमेवेदं तद्वद् विश्वं विचारितम्॥ २-५॥

**भावार्थः** वैचारिक दृष्टिबाट यो स्पष्ट हुन्छ कि विश्व पनि आत्मा नै हो ।

यथैवेक्षुरसे क्लृप्ता तेन व्याप्तैव शर्करा ।
तथा विश्वं मयि क्लृप्तं मया व्याप्तं निरन्तरम्॥ २-६॥

**भावार्थः** जसरी उखुबाट बनेको सख्खरमा उखुको रस नै हुन्छ त्यस्तै 'म' बाट बनेको विश्व 'म' मा नै निरन्तर व्याप्त छ ।

आत्मज्ञानाज्जगद् भाति आत्मज्ञानान्न भासते ।
रज्ज्वज्ञानादहिर्भाति तज्ज्ञानाद् भासते न हि ॥ २-७॥

**भावार्थः** आत्मज्ञानको अभावकै कारण जगत स्थूल रुपमा देखिन्छ, त्यस्तै प्रकार डोरीको ज्ञान छैन भने त्यो सर्प जस्तै लाग्छ । डोरीको ज्ञान भए पछि भ्रम निवारण हुन्छ ।

प्रकाशो मे निजं रूपं नातिरिक्तोऽस्म्यहं ततः ।
यदा प्रकाशते विश्वं तदाहं भास एव हि ॥ २-८॥

**भावार्थः** प्रकाश नै मेरो निज रुप हो, यसको शिवाय अरु केही छैन । जब विश्व प्रकाशित हुन्छ, तब त्यो मसँग भएको आभास हुन्छ ।

अहो विकल्पितं विश्वमज्ञानान्मयि भासते ।
रूप्यं शुक्तौ फणी रज्जौ वारि सूर्यकरे यथा ॥ २-९॥

**भावार्थः** यो कति आश्चर्यको विषय हो कि, अज्ञानतावश कल्पित विश्व मलाई सीपी भित्रको सेतो टल्किने पदार्थ चाँदी हो, डोरी सर्प हो र सूर्यको किरण जल हो जस्ता लाग्थ्यो।

मत्तो विनिर्गतं विश्वं मय्येव लयमेष्यति ।
मृदि कुम्भो जले वीचिः कनके कटकं यथा ॥ २-१०॥

**भावार्थः** 'म' मै निसृत विश्व 'म' मै उसै प्रकारले विलीन हुन्छ, जसरी माटोबाट बनेको घैटो माटैमा विलीन हुन्छ। पानीबाट उठेको छाल पानी मै र सुनबाट बनेका गहनाहरु पुनः सुन मै विलीन हुन्छन्।

अहो अहं नमो मह्यं विनाशो यस्य नास्ति मे ।
ब्रह्मादिस्तम्बपर्यन्तं जगन्नाशोऽपि तिष्ठतः ॥ २-११॥

**भावार्थः** म आश्चर्यचकित छु। म मलाई नै नमस्कार गर्दछु । जगत नाश हुने बेलामा ब्रह्मा देखि लिएर सबै विनष्ट हुन्छन् तर मेरो नाश हुँदैन ।

अहो अहं नमो मह्यं एकोऽहं देहवानपि ।
क्वचिन्न गन्ता नागन्ता व्याप्य विश्वमवस्थितः ॥ २-१२॥

**भावार्थः** म आश्चर्यचकित छु। म मलाई नै नमस्कार गर्दछु। धेरै देहमा हुँदा हुँदै पनि म एउटै हूँ। म कही कतै आउने जाने गर्दिन बरु सम्पूर्ण विश्व मैमा अवस्थित छ ।

अहो अहं नमो मह्यं दक्षो नास्तीह मत्समः ।
असंस्पृश्य शरीरेण येन विश्वं चिरं धृतम्॥ २-१३॥

**भावार्थः** म आश्चर्यचकित छु। म मलाई नै नमस्कार गर्दछु। विश्वमा म जस्तो दक्ष अरु कोही पनि छैन। म शरीरलाई छुदिन। यस्तो स्थितिमा म विश्वलाई धेरै लामो काल सम्म धारण गर्छु।

अहो अहं नमो मह्यं यस्य मे नास्ति किंचन ।
अथवा यस्य मे सर्वं यद् वाङ्मनसगोचरम्॥ २-१४॥

**भावार्थः** म आश्चर्यचकित छु। म मलाई नै नमस्कार गर्दछु। मसंग भएका कुनै बस्तुहरु पनि मेरो होइनन् तर वोली र मनबाट संवद्ध सम्पूर्ण विषय चाँहि मेरै हुन ।

ज्ञानं ज्ञेयं तथा ज्ञाता त्रितयं नास्ति वास्तवम्।
अज्ञानाद् भाति यत्रेदं सोऽहमस्मि निरंजनः ॥ २-१५॥

**भावार्थः** ज्ञान, ज्ञेय र ज्ञाता यी तीनवटै वास्तविक होइनन् । यी तीन अज्ञानीका लागि मात्र सत्य लाग्छन् । जब कि 'म' निरन्जन हुँ ।

द्वैतमूलमहो दुःखं नान्यत्तस्याऽस्ति भेषजम्।
दृश्यमेतन्मृषा सर्वं एकोऽहं चिद्रसोमलः ॥ २-१६॥

**भावार्थः** द्वैत नै दुख को मुहान हो, यसको कुनै औषधी छैन । जुन देखिने दृष्यहरु छन्, तिनीहरु झुटा हुन् । म एक अद्वितीय र चित् मात्र हुँ ।

बोधमात्रोऽहमज्ञानाद् उपाधिः कल्पितो मया ।
एवं विमृशतो नित्यं निर्विकल्पे स्थितिर्मम ॥ २-१७॥

**भावार्थः** म बोध मात्र हुँ । अज्ञानतावश मैले उपाधिको कल्पना गरे तर पनि नित्य विचार गरेर म निर्विकल्प मै स्थित छु ।

न मे बन्धोऽस्ति मोक्षो वा भ्रान्तिः शान्तो निराश्रया ।
अहो मयि स्थितं विश्वं वस्तुतो न मयि स्थितम्॥ २-१८॥

**भावार्थः** यो कस्तो आश्चर्य हो कि म मा नै स्थित यो म मा नै निहित रहेको छैन । अत न म वन्धन हूँ न त म मोक्षको नै आकाङ्क्षी हूँ । म निराश्रय हूँ । शान्ती हूँ । भ्रान्तिबाट मुक्त छु ।

सशरीरमिदं विश्वं न किंचिदिति निश्चितम्।
शुद्धचिन्मात्र आत्मा च तत्कस्मिन्कल्पनाधुना ॥ २-१९॥

**भावार्थः** निश्चित रुपमा यो शरीरसहित यस विश्वका केहीको पनि अर्थ छैन । यो विशुद्ध आत्मा हो । यसको अतिरिक्त यसको अरु कुनै कल्पना हुन सक्दैन । शरीर त केवल आत्माको साक्षी मात्र हो ।

शरीरं स्वर्गनरकौ बन्धमोक्षौ भयं तथा ।
कल्पनामात्रमेवैतत्किं मे कार्यं चिदात्मनः ॥ २-२०॥

**भावार्थः** शरीर, स्वर्ग, नर्क, बन्धन, मोक्ष तथा भय कल्पना मात्र हो । यो शरीर मै रहेको चिदात्माको यो सँग के सम्बन्ध छ ?

अहो जनसमूहेऽपि न द्वैतं पश्यतो मम ।
अरण्यमिव संवृत्तं क्व रतिं करवाण्यहम्॥ २-२१॥

**भावार्थः** आश्चर्य यो छ कि जनसमूह देख्दा पनि मलाई द्वैत अथवा दुईको दर्शन हुँदैन । मेरो दृष्टिमा जनसमूह पनि अरण्यवत भईसक्यो, हराईसक्यो । अत कुनमा प्रीति राखौं ।

नाहं देहो न मे देहो जीवो नाहमहं हि चित्।
अयमेव हि मे बन्ध आसीद्या जीविते स्पृहा ॥ २-२२॥

**भावार्थः** म शरीर होइन । मेरो शरीर छैन । न त म जीव नै हुँ । निसन्देह म चैतत्य स्वरुप हुँ । म जीवित रहन पाऊँ भन्ने इच्छा नै बन्धन हो ।

अहो भुवनकल्लोलैर्विचित्रैर्द्राक् समुत्थितम्।
मय्यनंतमहाम्भोधौ चित्तवाते समुद्यते ॥ २-२३॥

**भावार्थः** आचार्यको विषय हो कि म यो भूवनलाई कल्लोलित गर्ने जसमा चित्तको वायुबाट अनंत तरङ्ग उत्पन्न हुन्छ ।

मय्यनंतमहाम्भोधौ चित्तवाते प्रशाम्यति ।
अभाग्याज्जीववणिजो जगत्पोतो विनश्वरः ॥ २-२४॥

**भावार्थः** म सर्वव्यापी समुद्र हुँ मेरो चित्त वायु शान्त भयो भने जीवरुपी वणिकको दुर्भाग्यबाट जगत रुपी नौकाको नाश निश्चित हुन्छ । यहाँ चित्त वायुको तरंग भनेको चित्तमा उठने संकल्प र विकल्पहरु हुन् । यी नै संकल्प र विकल्पहरुले चित्तलाई रोकेर बस्न दिदैन ।

मय्यनन्तमहाम्भोधावाश्चर्यं जीववीचयः ।
उद्यन्ति घ्नन्ति खेलन्ति प्रविशन्ति स्वभावतः ॥ २-२५॥

**भावार्थः** आश्चर्य ! मेरो अनन्त महासागर र रुपमा जीवरुपी तरङ्ग उत्पन्न हुन्छ । शत्रुता - मित्रता गर्छ, खेल्छ, र त्यसको स्वभावै म मा विलीन हुन्छ ।

# प्रकरण ३
# आक्षेपद्वारको उपदेश

अष्टावक्र उवाच ॥

अविनाशिनमात्मानं एकं विज्ञाय तत्त्वतः ।
तवात्मज्ञानस्य धीरस्य कथमर्थार्जने रतिः ॥ ३-१॥

**भावार्थः** अविनाशी आत्मा एक हो, यो तत्वलाई बुझ्ने विज्ञ भएर पनि तिमी जस्तो आत्मज्ञानी अथवा धीर धनार्जनको रुचि के हुन्छ ?

आत्माज्ञानादहो प्रीतिर्विषयभ्रमगोचरे ।
शुक्तेरज्ञानतो लोभो यथा रजतविभ्रमे ॥ ३-२॥

**भावार्थः** आत्मज्ञानी नभएका व्यक्तिमा विषयको भ्रम प्रतीत हुन्छ, सीपी देखेर चाँदीको लोभ भए जस्तै ।

विश्वं स्फुरति यत्रेदं तरङ्गा इव सागरे ।
सोऽहमस्मीति विज्ञाय किं दीन इव धावसि ॥ ३-३॥

**भावार्थः** जस प्रकारले सागरमा तरङ्ग उत्पन्न हुन्छ, त्यसै प्रकार आत्माबाट विश्व । तब तिमी स्वयंमा 'म' हुँ मानेर दुखी भएर किन भौतारिन्छौं ।

श्रुत्वापि शुद्धचैतन्य आत्मानमतिसुन्दरम्।
उपस्थेऽत्यन्तसंसक्तो मालिन्यमधिगच्छति ॥ ३-४॥

**भावार्थः** शुद्ध, चैतन्य र अति सुन्दर आत्माको बारेमा सुनेर पनि जो छेउ छाउका विषयमा लिप्त रहन्छन्, त्यस्तालाई मलिनता प्राप्त हुँदैन ।

सर्वभूतेषु चात्मानं सर्वभूतानि चात्मनि ।
मुनेर्जानत आश्चर्यं ममत्वमनुवर्तते ॥ ३-५॥

**भावार्थः** आत्मा मै सवै शरीरहरु हुने र सबै शरीरमा आत्मा हुने ज्ञान हुँदा हुदै पनि मानिसहरु ममता गर्छन् । यो आश्चर्यको कुरा हा ।

आस्थितः परमाद्वैतं मोक्षार्थेऽपि व्यवस्थितः ।
आश्चर्यं कामवशगो विकलः केलिशिक्षया ॥ ३-६॥

**भावार्थः** आचार्यको कुरा यो छ कि मानिस सर्वोच्च अद्वैतमा स्थीर भए पनि, मोक्षको लागि आतुर भए पनि मानिस कर्मको वसमा सदैव केलि ( यौन) क्रिडातिर लाग्छन् र सही मार्ग अपनाउन सक्दैनन् । मानिस अद्वैतमा स्थीर भए पनि द्वैतको बाटो लाग्छन् ।

उद्भूतं ज्ञानदुर्मित्रमवधार्यातिदुर्बलः ।
आश्चर्यं काममाकाङ्क्षेत्कालमन्तमनुश्रितः ॥ ३-७॥

**भावार्थः** संचित ज्ञानको शत्रु काम हो तर आश्चर्य यो छ कि अति दुर्वल अथवा अन्तकालमा पुगेको मानिसले पनि आकांशा नै गर्छन् ।

इहामुत्र विरक्तस्य नित्यानित्यविवेकिनः ।
आश्चर्यं मोक्षकामस्य मोक्षाद् एव विभीषिका ॥ ३-८॥

**भावार्थः** आश्चर्य ! यो लोक र परलोकको भोगबाट विरक्त, नित्य र अनित्यको विवेक गर्ने अथवा मोक्षका लागि इच्छुक मानिस मोक्षबाटै डराउँछ ।

धीरस्तु भोज्यमानोऽपि पीड्यमानोऽपि सर्वदा ।
आत्मानं केवलं पश्यन्न तुष्यति न कुप्यति ॥ ३-९॥

**भावार्थः** घीर अथवा ज्ञानी व्यक्ति भोग गर्छन् र पिडित भएर पनि एक मात्र आत्मा मात्र देख्छन्, ती न त खुशी हुन्छन् न त दुःखी ।

चेष्टमानं शरीरं स्वं पश्यत्यन्यशरीरवत्।
संस्तवे चापि निन्दायां कथं क्षुभ्येत्महाशयः ॥ ३-१०॥

**भावार्थः** जो आफ्नो क्रियाशील शरीर र अरुको शरीरतिर दृष्टि पुऱ्याउँछ, ती महाशय प्रशंसा र निन्दाबाट कसरी क्षुब्ध हुन सक्छन् ?

मायामात्रमिदं विश्वं पश्यन्विगतकौतुकः ।
अपि सन्निहिते मृत्यौ कथं त्रस्यति धीरधीः ॥ ३-११॥

**भावार्थः** जसको कौतुक भाव समाप्त भईसकेको छ त्यस्ता धीर पुरुषलाई यो विश्वमात्र मायावत दृष्टिगोचर हुन्छ । उ मृत्यु आउँदा कसरी भयभित हुन सक्छ ?

निःस्पृहं मानसं यस्य नैराश्येऽपि महात्मनः ।
तस्यात्मज्ञानतृप्तस्य तुलना केन जायते ॥ ३-१२॥

**भावार्थः** जसको मानसिकता मोक्षको कामनाबाटै निस्पृह हुन्छ अथवा अक्षुत हुन्छ, त्यस्ता तृप्त महात्मनको तुलना को सँग हुन सक्छ ?

स्वभावाद् एव जानानो दृश्यमेतन्न किंचन ।
इदं ग्राह्यमिदं त्याज्यं स किं पश्यति धीरधीः ॥ ३-१३॥

**भावार्थः** जो घीर गम्भीर कुरा जान्दछन् यो दृश्य स्वभावत केही पनि होइन, त्यो ज्ञानीका लागि कुनै कुरा ग्राह्य हो र कुन कुरा त्याग्य हो ?

अंतस्त्यक्तकषायस्य निर्द्वन्द्वस्य निराशिषः ।
यदृच्छयागतो भोगो न दुःखाय न तुष्टये ॥ ३-१४॥

**भावार्थः** जसले अन्तःकरण धोई वासनाको मयललाई त्याग दिएर निद्वन्द र आशारहित हुन्छ ऊ दैव इच्छाबाट प्राप्त भोगबाट न त दुखी हुन्छ न त संन्तुष्टि नै ।

# प्रकरण ४
# पुनः शिष्यानुभव

जनक उवाच ॥

हन्तात्मज्ञानस्य धीरस्य खेलतो भोगलीलया ।
न हि संसारवाहीकैर्मूढैः सह समानता ॥ ४-१॥

**भावार्थः** निसन्देह भोगलीलामा खेल्दै गरेको आत्मज्ञानी अथवा धीरपुरुष गम्भीर हुन्छ, त्यो मूर्ख जस्तो संसारिक लिप्साहरुमा टाँसिन सक्दैन ।

यत्पदं प्रेप्सवो दीनाः शक्राद्याः सर्वदेवताः ।
अहो तत्र स्थितो योगी न हर्षमुपगच्छति ॥ ४-२॥

**भावार्थः** पद प्राप्त गर्ने इच्छाबाट इन्द्र र अरु देवता समेत दुखी हुनपुग्छन् । आश्चर्य यो छ कि योगी त्यो पद प्राप्त गरेर पनि हर्षित हुँदैनन् । योगी निर्लिप्त हुन्छ तर भोगी संलिप्त ।

तज्ज्ञस्य पुण्यपापाभ्यां स्पर्शो ह्यन्तर्न जायते ।
न ह्याकाशस्य धूमेन दृश्यमानापि सङ्गतिः ॥ ४-३॥

**भावार्थः** तत्व ज्ञानबाट अवगत हुने योगीको ह्रदयमा स्पर्श हुँदैन, पुण्य पाप केही हुँदैन । जसरी आकाशमा उठेको धुँवा दृष्यमान हुँदा हुँदै पनि आकाश सँग सम्बन्धित हुँदैनन् । त्यस्तै पुण्य र पापले तत्वज्ञानीलाई छुन सक्दैनन् ।

आत्मैवेदं जगत्सर्वं ज्ञातं येन महात्मना ।
यदृच्छया वर्तमानं तं निषेद्धुं क्षमेत कः ॥ ४-४॥

**भावार्थः** यो सम्पूर्ण जगत आत्मा हो भन्ने जुन महात्मालाई ज्ञान हुन्छ, त्यस्तो स्वेच्छापूर्वक आचरण गर्ने ब्यक्तिलाई रोक्ने क्षमता वर्तमानमा को सँग छ ?

आब्रह्मस्तम्बपर्यन्ते भूतग्रामे चतुर्विधे ।
विज्ञस्यैव हि सामर्थ्यमिच्छानिच्छाविवर्जने ॥ ४-५॥

**भावार्थः** ब्रह्माबाटै तृण पर्यन्त चार प्राणीहरुबाट परिपूर्ण सृष्टिहरुमा ज्ञान मात्रले इच्छा र अनिच्छालाई रोक्न सक्तछ । ज्ञानी व्यक्तिलाई इच्छा र अनिच्छाले छुन पनि सक्तैनन् ।

आत्मानमद्वयं कश्चिज्जानाति जगदीश्वरम्।
यद् वेत्ति तत्स कुरुते न भयं तस्य कुत्रचित्॥ ४-६॥

**भावार्थः** कोही ज्ञानी जीव र जगदीश्वरलाई अद्वैत रुपमा देख्छन् । यस्ता ज्ञानी व्यक्तिले योग्य कर्म गर्दा गर्दै उनीहरुलाई डर लाग्दैन ।

# अध्याय - ५
# लयोपदेश प्रकरण

अष्टावक्र उवाच ॥

न ते संगोऽस्ति केनापि किं शुद्धस्त्यक्तुमिच्छसि ।
संघातविलयं कुर्वन्नेवमेव लयं व्रज ॥ ५-१॥

**भावार्थः** तिम्रो कसैसँग पनि सँग(आबद्धता) छैन । तिमी शुद्ध छौं । अतः तिमीमा के चिज त्याग्ने इच्छा छ ? तिमीले देहको मोह त्याग गर र लय( मोक्ष) प्राप्त गर ।

उदेति भवतो विश्वं वारिधेरिव बुद्बुदः ।
इति ज्ञात्वैकमात्मानं एवमेव लयं व्रज ॥ ५-२॥

**भावार्थः** जसरी समुद्रवाट बुलबुल उत्पन्न हुन्छन् त्यसरी नै तिमीबाट विश्व उत्पन्न हुन्छ । तसर्थ एउटै आत्मालाई बुझेर लय (मुक्ति) प्राप्त गर ।

प्रत्यक्षमप्यवस्तुत्वाद् विश्वं नास्त्यमले त्वयि ।
रज्जुसर्प इव व्यक्तं एवमेव लयं व्रज ॥ ५-३॥

**भावार्थः** दृश्यमान विश्व प्रत्यक्ष हुँदा हुँदै पनि, यसको अस्तित्व छैन। जसरी डोरीमा सर्पको भान हुन्छ । तिमी शुद्धका लागि यो केही पनि छैन् । तिमीले मुक्ति प्राप्त गर ।

समदुःखसुखः पूर्ण आशानैराश्ययोः समः ।
समजीवितमृत्युः सन्नेवमेव लयं व्रज ॥ ५-४॥

**भावार्थः** जसका लागि सुख, दुख र आशा निराशा एक समान छन्, जो पूर्ण छ र जो जीवन मरणलाई समान मान्दछ, तिमी पनि त्यस्तो अनुभूति गरी मुक्ति प्राप्त गर ।

# प्रकरण ६

# पुनः गुरुपदेश

जनक उवाच ॥

आकाशवदनन्तोऽहं घटवत्प्राकृतं जगत्।
इति ज्ञानं तथैतस्य न त्यागो न ग्रहो लयः ॥ ६-१॥

**भावार्थः** म आकाशमय अनन्त छु, जगत घैला जस्तै प्राकृतिक छ। अत मलाई ज्ञान छ कि न यो त्याग हो, न यो ग्रहण न त विलय नै।

महोदधिरिवाहं स प्रपंचो वीचिसऽन्निभः।
इति ज्ञानं तथैतस्य न त्यागो न ग्रहो लयः ॥ ६-२॥

**भावार्थः** म महासागर समान छु, संसारिक प्रपञ्चहरु तरङ्गका समान हुन, यी उठ्छन् र हराउछन्। अतः यो यसको न त्याग हो न ग्रहण नै अथवा मुक्ति नै मलाई यसको ज्ञान छ।

अहं स शुक्तिसङ्काशो रूप्यवद् विश्वकल्पना।
इति ज्ञानं तथैतस्य न त्यागो न ग्रहो लयः ॥ ६-३॥

**भावार्थः** म सीपी जस्तै हुँ र यो विश्वको कल्पना चाँहि चाँदी समान छ। तसर्थ मलाई यो ज्ञान छ कि न त्यो त्याग हो न ग्रहण, न त विलय नै।

अहं वा सर्वभूतेषु सर्वभूतान्यथो मयि।
इति ज्ञानं तथैतस्य न त्यागो न ग्रहो लयः ॥ ६-४॥

**भावार्थः** निसन्देह म सर्वस्व मै मा निहित छु र सर्वस्व म मै निहित छ। अतः मलाई ज्ञान भयो कि यो न त्याग हो न ग्रहण न त विलय नै।

# अध्याय ७
# शिष्यानुभव प्रकरण

जनक उवाच ॥

मय्यनंतमहाम्भोधौ विश्वपोत इतस्ततः ।
भ्रमति स्वांतवातेन न ममास्त्यसहिष्णुता ॥ ७-१॥

**भावार्थः** म अनन्त महासागरमा विश्वपोत मनको वायुबाट यता उता भ्रमण गर्छु । म मा असहिष्णुता छैन ।

मय्यनंतमहाम्भोधौ जगद्वीचिः स्वभावतः ।
उदेतु वास्तमायातु न मे वृद्धिर्न च क्षतिः ॥ ७-२॥

**भावार्थः** यसको अस्त किन नहोस? म अनन्त महासागरमा जगतको तरङ्ग स्वभाव जस्तै उदाउछु । मेरो न त वृद्धि हुन्छ न त क्षति नै ।

मय्यनंतमहाम्भोधौ विश्वं नाम विकल्पना ।
अतिशांतो निराकार एतदेवाहमास्थितः ॥ ७-३॥

**भावार्थः** अनन्त महासागरमा निसंन्देह यो विश्व मात्र कल्पना हो । म पूर्णतः शान्त, निराकार तथा यसकै आश्रयमा छु ।

नात्मा भावेषु नो भावस्तत्रानन्ते निरंजने ।
इत्यसक्तोऽस्पृहः शान्त एतदेवाहमास्तितः ॥ ७-४॥

**भावार्थः** देहादि पदार्थमा आत्मा हुँदैन, देहादि पदार्थ त्यो अनन्त र निरन्जनमा हुँदैन । यसै प्रकारले म अनाशक्त र स्पर्श नहुने, शान्त भएर यसैमा आश्रित छु ।

अहो चिन्मात्रमेवाहं इन्द्रजालोपमं जगत्।
इति मम कथं कुत्र हेयोपादेयकल्पना ॥ ७-५॥

**भावार्थः** अहो ! म चैतन्य मात्र हुँ । यो जगत इन्द्रजाल समान छ । अत मेरो हेय उपादेयको कल्पना कसरी र के मा हो ।

# प्रकरण ८
# वंध मोक्ष

अष्टावक्र उवाच ॥

तदा बन्धो यदा चित्तं किञ्चिद् वाञ्छति शोचति ।

किंचिन्मुंचति गृण्हाति किंचिद् दृष्यति कुप्यति ॥ ८-१॥

**भावार्थः** जब चित्तले कुनै वाञ्छना या शोक गर्छ, त्याग या ग्रहण गर्छ, हर्षित र कुपित हुन्छ तब उ बन्धन ग्रस्त हुन्छ । वांछना गर्न पनि सबै व्याधिहरुको जड हो । चित्त चञ्चल हुनु नै मानवको वन्धन हो ।

तदा मुक्तिर्यदा चित्तं न वाञ्छति न शोचति ।
न मुंचति न गृण्हाति न हृष्यति न कुप्यति ॥ ८-२॥

**भावार्थः** मुक्ति तव मिल्छ जब चित्तले न वान्छना गर्छ न शोक, न त्याग वा ग्रहण, न हर्षित हुन्छ न त दुखित नै हुन्छ ।

तदा बन्धो यदा चित्तं सक्तं काश्वपि दृष्टिषु ।
तदा मोक्षो यदा चित्तमसक्तं सर्वदृष्टिषु ॥ ८-३॥

**भावार्थः** जब चित्त कुनै पनि भौतिक पदार्थप्रति आशक्ति हुन्छ तब बन्धनग्रस्त हुन्छ । जब चित्त सबै दृष्यबाट अनाशक्त हुन्छ तब मोक्ष हुन्छ।

यदा नाहं तदा मोक्षो यदाहं बन्धनं तदा ।
मत्वेति हेलया किंचिन्मा गृहाण विमुंच मा ॥ ८-४॥

**भावार्थः** जब म हैन, छैन भन्ने भाव हुन्छ, तब उ मोक्ष हुन्छ, जब म छु तब बन्धन हुन्छ । यस्तो जानेर न कुनै ग्रहण गर्ने र न कुनै त्यागने ब्यक्ति इच्छाबाट मुक्त हुन्छ ।

# प्रकरण ९
# निर्वेद प्रकरण

अष्टावक्र उवाच ॥

कृताकृते च द्वन्द्वानि कदा शान्तानि कस्य वा ।
एवं ज्ञात्वेह निर्वेदाद् भव त्यागपरोऽव्रती ॥ ९-१ ॥

**भावार्थः** कृत-अकृत झगडाले कहिले र कसलाई शान्त हुन्छ ? अतः यो सत्यलाई जानेर यो लोकबाट विरक्त र अवृती भएर त्यागी परायणी वन ।

कस्यापि तात धन्यस्य लोकचेष्टावलोकनात्।
जीवितेच्छा बुभुक्षा च बुभुत्सोपशमः गताः ॥ ९-२॥

**भावार्थः** हे बाबु जनव्यवहार अथवा लोकको उत्पत्ति र विनाश देखेर कुनै धन्य पुरुषको बाँच्ने, भोग्ने र ज्ञानका इच्छाहरु शान्त हुन्छन् ।

अनित्यं सर्वमेवेदं तापत्रितयदूषितम्।
असारं निन्दितं हेयमिति निश्चित्य शाम्यति ॥ ९-३॥

**भावार्थः** सारा सृष्टि अनित्य छ, तीन तापहरुबाट दुषित छ, असार निन्दनीय र हेय छ, जसलाई यो निश्चय हुन्छ उ निवृत हुन्छ ।

कोऽसौ कालो वयः किं वा यत्र द्वन्द्वानि नो नृणाम्।
तान्युपेक्ष्य यथाप्राप्तवर्ती सिद्धिमवाप्नुयात्॥ ९-४॥

**भावार्थः** कुन काल र कुन अवस्था हुन्छ जहाँ व्यक्तिको द्वन्द्व नहोस् । जसले यो उपेक्षा गरेर जे प्राप्त भएको छ त्यसलाई शिरोधार्य गरी
भोग गरेमा उसलाई सिद्धि प्राप्त हुन्छ ।

नाना मतं महर्षीणां साधूनां योगिनां तथा ।
दृष्ट्वा निर्वेदमापन्नः को न शाम्यति मानवः ॥ ९-५॥

**भावार्थः** महर्षि साधुहरु र योगीहरुको विभिन्न मत छन् । यस्तो स्थितिमा विरक्त प्राप्त कुन व्यक्ति छ जो शान्त हुँदैन?

कृत्वा मूर्तिपरिज्ञानं चैतन्यस्य न किं गुरुः ।
निर्वेदसमतायुक्त्या यस्तारयति संसृतेः ॥ ९-६॥

**भावार्थः** वैराग्य, समता र युक्तिबाट चैतन्यको मूर्तिज्ञान प्राप्त गर जसले संसारबाट आफूलाई तार्छ । के त्यो गुरु होइन ?

पश्य भूतविकारांस्त्वं भूतमात्रान्यथार्थतः ।
तत्क्षणाद् बन्धनिर्मुक्तः स्वरूपस्थो भविष्यसि ॥ ९-७॥

**भावार्थः** भूत-विकारहरुको यथार्थतः भूत(शरीर) मात्र हेर, त्यही क्षण तिमी बन्धनमुक्त भएर तिमीले आत्मस्वरुप प्राप्त गर्छौ ।

वासना एव संसार इति सर्वा विमुंच ताः ।
तत्त्यागो वासनात्यागात्स्थितिरद्य यथा तथा ॥ ९-८॥

**भावार्थः** वासनाहरु नै संसार हुन् । अतः यिनीहरुको त्याग गर्नु नै संसारको त्याग गर्नु हो । त्यसपछि आफ्नो प्रारव्धानुसार स्थितिको प्राप्त गर ।

## अध्याय १०

# उपशम प्रकरण

अष्टावक्र उवाच ॥

विहाय वैरिणं काममर्थं चानर्थसंकुलम्।
धर्ममप्येतयोर्हेतुं सर्वत्रानादरं कुरु ॥ १०-१॥

**भावार्थः** वैरी रुपी कामको त्याग गर, अनर्थकारी अर्थको त्याग गर, काम र अर्थको हेतुले जसले उद्योग गर्छ, त्यसलाई पनि त्याग गर । त्यसपछि काम र अर्थको सर्वत्र अनादार गर ।

स्वप्नेन्द्रजालवत्पश्य दिनानि त्रीणि पंच वा ।
मित्रक्षेत्रधनागारदारदायादिसम्पदः ॥ १०-२॥

**भावार्थः** मित्र, क्षेत्र, धन, घर, पत्नी अथवा भाइ आदि स्वप्नका संपदा अथवा इन्द्रजालका समान हुन् । जुन ३ अथवा ५ दिन सम्म मात्र रहन्छन् ।

यत्र यत्र भवेत्तृष्णा संसारं विद्धि तत्र वै ।
प्रौढवैराग्यमाश्रित्य वीततृष्णः सुखी भव ॥ १०-३॥

**भावार्थः** जहाँ जहाँ तृष्णा र इच्छा हुन्छ, त्यही त्यही संसारका अस्तित्व हुन्छ । यस्तो जानेर परिपक्क वैराग्यको आश्रय लिएर तृष्णालाई त्याग गरी सुखी हौं ।

तृष्णामात्रात्मको बन्धस्तन्नाशो मोक्ष उच्यते ।
भवासंसक्तिमात्रेण प्राप्तितुष्टिर्मुहुर्मुहुः ॥ १०-४॥

**भावार्थः** तृष्णा मात्र आत्माको बन्धन हो । त्यसको नाशलाई नै मोक्षको संज्ञा दिइएको छ । संसारबाट अनाशक्तिबाटै पूर्णतः आत्माको प्रतीत हुन्छ र संन्तुष्टि हुन्छ ।

त्वमेकश्चेतनः शुद्धो जडं विश्वमसत्तथा ।
अविद्यापि न किंचित्सा का बुभुत्सा तथापि ते ॥ १०-५॥

**भावार्थः** तिमी एक शुद्ध चेतना हौं, विश्व जड र असत छ । यस्तै प्रकारले अविधा पनि असत छ । यस्तो स्थितिमा तिमी के जान्ने मोह राख्छौं ।

राज्यं सुताः कलत्राणि शरीराणि सुखानि च ।
संसक्तस्यापि नष्टानि तव जन्मनि जन्मनि ॥ १०-६॥

**भावार्थः** प्रत्येक आशक्त व्यक्तिको राज्य, पुत्र, स्त्री, शरीर र सुख नाशवान छ । तिम्रो यी जन्म जन्मबाट नष्ट भएका छन् ।

अलमर्थेन कामेन सुकृतेनापि कर्मणा ।
एभ्यः संसारकान्तारे न विश्रान्तमभून्मनः ॥ १०-७॥

**भावार्थः** अर्थ, काम र सुकृत कर्म धेरै गऱ्यौ तर तिमीलाई यो संसाररुपी वनमा चित्तको विश्रान्ति मिलेन ।

कृतं न कति जन्मानि कायेन मनसा गिरा ।
दुःखमायासदं कर्म तदद्याप्युपरम्यताम्॥ १०-८॥

**भावार्थः** अनेक जन्म जन्म भरी शरीर, मन र वचनले कति दुखदायी श्रम लगाएर कर्म गऱ्यौं । अव सारा कर्महरुलाई त्याग गर ।

# प्रकरण ११
# ज्ञानाष्टक

अष्टावक्र उवाच ॥

भावाभावविकारश्च स्वभावादिति निश्चयी ।
निर्विकारो गतक्लेशः सुखेनैवोपशाम्यति ॥ ११-१॥

**भावार्थः** जो निश्चित रुपले यो जान्दछ कि भाव र अभावको विकार स्वभावबाट पैदा हुन्छ, उ निर्विकार र क्लेशविहीन व्यक्ति सुख र शान्ति प्राप्त गर्छन् ।

ईश्वरः सर्वनिर्माता नेहान्य इति निश्चयी ।
अन्तर्गलितसर्वाशः शान्तः क्वापि न सज्जते ॥ ११-२॥

**भावार्थः** निश्चित रुपले जसले यो जान्दछ कि सर्वनिर्माता केवल ईश्वर हुन्, अरु कुनै होइनन्, यस्तो व्यक्तिको अन्तर्मन कामनारहित, शान्त र अनाशक्त हुन्छ ।

आपदः सम्पदः काले दैवादेवेति निश्चयी ।
तृप्तः स्वस्थेन्द्रियो नित्यं न वान्छति न शोचति ॥ ११-३॥

**भावार्थः** आपदा र संम्पदा समयानुसार दैवयोगबाट प्राप्त हुन्छ । जुन विदित नै छ । यो सर्वदा तृप्त र इन्द्रिय जीत अप्राप्त हुने इच्छा हुन्छ, त्यो विषय कामना होइन ।

सुखदुःखे जन्ममृत्यू दैवादेवेति निश्चयी ।
साध्यादर्शी निरायासः कुर्वन्नपि न लिप्यते ॥ ११-४॥

**भावार्थः** सुख दुख जन्म मृत्यु दैव योगबाटै निश्चय हुन्छ । जसलाई यो निश्चय हुन्छ, उसले साध्य र प्रयास विहिन कर्म गर्छ तर त्यसैमा लिप्त हुँदैन ।

चिन्तया जायते दुःखं नान्यथेहेति निश्चयी ।
तया हीनः सुखी शान्तः सर्वत्र गलितस्पृहः ॥ ११-५॥

**भावार्थः** यो चिन्ताबाटै दुख उब्जिन्छ । उसको अरु कुनै कारण छैन । जसले यो निश्चय गर्छ (बुझ्दछ) उ सुखी र शान्त हुन्छ । उसका सबै कामनाहरु गलेर जान्छन् ।

नाहं देहो न मे देहो बोधोऽहमिति निश्चयी ।
कैवल्यं इव सम्प्राप्तो न स्मरत्यकृतं कृतम्॥ ११-६॥

**भावार्थः** न म शरीर हुँ, न यो मेरो शरीर हो, म ता बोध (चेतना) हुँ । यसबाट यो निश्चय हुन्छ कि यो कैवल्य प्राप्त भई सक्यो, अब कृत र अकृत कर्महरुको याद हुँदैन ।

आब्रह्मस्तम्बपर्यन्तमहमेवेति निश्चयी ।
निर्विकल्पः शुचिः शान्तः प्राप्ताप्राप्तविनिर्वृतः ॥ ११-७॥

**भावार्थः** ब्रह्मदेखि लिएर तृण सम्म "म नै सर्वव्यापक छु" जसबाट यो निश्चय हुन्छ कि 'त्यो' निर्विकल्प, शुद्ध, शान्त अथवा प्राप्त हुने र प्राप्त नहुने कुराबाट निवृत भए सुखी हुन्छ ।

नाश्चर्यमिदं विश्वं न किंचिदिति निश्चयी ।
निर्वासनः स्फूर्तिमात्रो न किंचिदिव शाम्यति ॥ ११-८॥

**भावार्थः** यो विश्वमा नाना प्रकारको आश्चर्य केही पनि छैन, जसबाट यो निश्चय हुन्छ कि उ वासनाबाट मुक्तमात्र स्फूर्ति स्वरुप बाहेक अरु केही होइन । यही वोध भएपछि मानिस शान्त हुन्छ ।

# प्रकरण १२
# एवमेवास्टक

जनक उवाच ॥
कायकृत्यासहः पूर्वं ततो वाग्विस्तरासहः ।
अथ चिन्तासहस्तस्माद् एवमेवाहमास्थितः ॥ १२-१॥

**भावार्थः** सर्वप्रथम मैले शारीरिक कृत्यहरुलाई त्यागी दिएँ । यस पछि वाणी विस्तारबाट मुक्त भएँ, तसर्थ चिन्तालाई छोडेर म सबैमा स्थित छु ।

प्रीत्यभावेन शब्दादेरदृश्यत्वेन चात्मनः ।
विक्षेपैकाग्रहृदय एवमेवाहमास्थितः ॥ १२-२॥

**भावार्थः** शब्द आदिको प्रेमको अभाव भएरै,  आत्मा अदृष्य भएरै विक्षेप र भ्रम त्याग गरेर, मेरो चित्त एकाग्र भएको छ र म आत्मास्थित छु ।

समाध्यासादिविक्षिप्तौ व्यवहारः समाधये ।
एवं विलोक्य नियमं एवमेवाहमास्थितः ॥ १२-३॥ ।

**भावार्थः** भ्रान्ति मिथ्या दिग्भ्रमितबाटै विक्षेप हुन्छ, यही समाधि व्यवहारको नियम हो । यस्तो नियम देखेर म समाधिसून्य आत्मामा स्थित छु ।

हेयोपादेयविरहाद् एवं हर्षविषादयोः ।
अभावादद्य हे ब्रह्मन्न्एवमेवाहमास्थितः ॥ १२-४॥

**भावार्थः** हे गुरुवर ! हेय र उपादेयको विरहबाट हुने हर्ष वा विषादबाट मुक्त भएर म आत्मास्थित भएको छु ।

आश्रमानाश्रमं ध्यानं चित्तस्वीकृतवर्जनम्।
विकल्पं मम वीक्ष्यैतैरेवमेवाहमास्थितः ॥ १२-५॥

**भावार्थः** आश्रम-अनाश्रम विविध विचार वा ध्यान तथा चित्तको स्वीकृति र वर्जनाबाट उत्पन्न आफ्नो विकल्पको लक्ष्य लिएर म यीबाट मुक्त भएर आत्मास्थित छु ।

कर्मानुष्ठानमज्ञानाद् यथैवोपरमस्तथा ।
बुध्वा सम्यगिदं तत्त्वं एवमेवाहमास्थितः ॥ १२-६॥

**भावार्थः** जसरी कर्म अनुष्ठान अज्ञानबाट प्राप्त हुन्छ । त्यसै प्रकार कर्म त्याग पनि । यो तत्वको भलिभाती बुझेर म कर्म अकर्मबाट मुक्त आत्मस्थित भएको छु ।

अचिंत्यं चिंत्यमानोऽपि चिन्तारूपं भजत्यसौ ।
त्यक्त्वा तद्भावनं तस्माद् एवमेवाहमास्थितः ॥ १२-७॥

**भावार्थः** अचिंत्य ब्रह्मको चिन्तन गर्ने व्यक्ति चिन्तामा लिप्त हुन्छ, म त्यही चिन्ता लिप्तलाई त्याग गरेर आत्मास्थित भएको छु ।

एवमेव कृतं येन स कृतार्थो भवेदसौ ।
एवमेव स्वभावो यः स कृतार्थो भवेदसौ ॥ १२-८॥

**भावार्थः** यस प्रकार जुन आत्मास्वरुप प्राप्त हुन्छ त्यो कृतार्थ हुन्छ र जसको स्वभावबाटै यस्तो छ उ पनि कृतार्थ हुन्छ ।

# प्रकरण १३

# यथासुख

जनक उवाच ॥

अकिंचनभवं स्वास्थं कौपीनत्वेऽपि दुर्लभम्।
त्यागादाने विहायास्मादहमासे यथासुखम्॥ १३-१॥

**भावार्थः** अकिंचनको भावनाबाट म स्वस्थ्य छु, चित्तको यस्तो स्थीरता र कौणीन धारण गर्ने व्यक्ति दुर्लभ हुन्छ । अतः त्याग र प्राप्ती रहीत भएर म सुख प्राप्ती गर्छु ।

कुत्रापि खेदः कायस्य जिह्वा कुत्रापि खेद्यते ।
मनः कुत्रापि तत्त्यक्त्वा पुरुषार्थे स्थितः सुखम्॥ १३-२॥

**भावार्थः** कसैको शरीरलाई कष्ट हुन्छ, कसैको वाणीलाई कष्ट हुन्छ, कसैको मनलाई कष्ट हुन्छ ।   म यी तीनैलाई त्याग गरी पुरुषार्थमा रही सुखमा छु ।

कृतं किमपि नैव स्याद् इति संचिन्त्य तत्त्वतः ।
यदा यत्कर्तुमायाति तत्कृत्वासे यथासुखम्॥ १३-३॥

**भावार्थः** कर्मको सम्बन्ध आत्मासँग हुँदैन, अतः यो कुरा जानेर जुन कर्म गर्नु पर्‍यो त्यसैमा सुख प्राप्त गरेको छु ।

कर्मनैष्कर्म्यनिर्बन्धभावा देहस्थयोगिनः ।
संयोगायोगविरहादहमासे यथासुखम्॥ १३-४॥

**भावार्थः** कर्म र निष्कर्मको बन्धनबाट त देह अभिमानी योगी आवद्ध हुन्छ। म देहको अथवा शरीरको संयोग वियोगबाट छुटकारा लिएर सुख प्राप्त गरिरहेको छु।

अर्थानर्थौ न मे स्थित्या गत्या न शयनेन वा।
तिष्ठन्गच्छन्स्वपन्तस्मादहमासे यथासुखम्॥ १३-५॥

**भावार्थः** मलाई रोकिदा, हिड्दा वा सुत्दा कुनै लाभ हानि हुँदैन, अतः रोकिदै गर्दा, हिड्दै गर्दा र सुन्दै गर्दा पनि सुख प्राप्त गर्छु। यहाँ भन्न खोजिएको कुरा यो छ कि आत्मा सर्वत्र व्यप्त छ सबैमा समाहित छ।

स्वपतो नास्ति मे हानिः सिद्धिर्यत्नवतो न वा।
नाशोल्लासौ विहायास्मदहमासे यथासुखम्॥ १३-६॥

**भावार्थः** तमलाई सुत्दा खेरी हानि हुन्छ न त यत्न वा प्रयत्न गर्दा सिद्धि हुन्छ। तसर्थ लाभ हानीलाई त्याग गरेर म सुख प्राप्त गरिरहेको छु।

सुखादिरूपा नियमं भावेष्वालोक्य भूरिशः।
शुभाशुभे विहायास्मादहमासे यथासुखम्॥ १३-७॥

**भावार्थः** धेरै जनाहरुबाट बारम्बार सुखादि रुपहरुको अनियमितता देखेर तथा शुभ अशुभको त्याग गरेर मैले सुख प्राप्त गरिरहेको छु।

# प्रकरण - १४
# शान्ति चतुष्टय

जनक उवाच ॥

प्रकृत्या शून्यचित्तो यः प्रमादाद् भावभावनः ।
निद्रितो बोधित इव क्षीणसंस्मरणो हि सः ॥ १४-१॥

**भावार्थः** जो स्वभाव देखि नै शुन्य चित्तको हुन्छ तर प्रमादवश संकल्प र विकल्प गर्छ र सुतेको बेलामा पनि जागेको नै हुन्छ, यस्तो व्यक्ति संसार–रहीत हुन्छ ।

क्व धनानि क्व मित्राणि क्व मे विषयदस्यवः ।
क्व शास्त्रं क्व च विज्ञानं यदा मे गलिता स्पृहा ॥ १४-२॥

**भावार्थः** आत्मास्वरुपको अनुभूति भएपछि, मेरा इच्छाहरु गलेर गए । त्यसपछि मेरो लागि धनादि कता गए । मित्रहरु कता गए र विषयहरु पनि कता गए, शास्त्र कता गए र विज्ञान कता गए ?

विज्ञाते साक्षिपुरुषे परमात्मनि चेश्वरे ।
नैराश्ये बंधमोक्षे च न चिंता मुक्तये मम ॥ १४-३॥

**भावार्थः** साक्षी पुरुष परमात्मा तथा ईश्वरलाई चिने पछि म आशाविहिन भएर वन्धनबाट मुक्त भएको छु । अतः अब मलाई मोक्षको कुनै चिन्ता छैन । परवाह छैन ।

अंतर्विकल्पशून्यस्य बहिः स्वच्छन्दचारिणः ।
भ्रान्तस्येव दशास्तास्तास्तादृशा एव जानते ॥ १४-४॥

**भावार्थः** आन्तरिक संकल्प र विकल्प रहित भएर शुन्य भएर बाहिरी जगल भ्रान्ति, व्यक्तिहरु पनि भ्रान्ति मान्ने र स्वच्छन्द विचरण गर्ने हुन्छ । यस्ता दशाहरु समान दशामा भएकाले बुझ्न सक्छन् । अरु व्यक्तिहरुले बुझ्न सक्दैनन । यहाँ स्वच्छन्द भनेको चाहनाहरु नभएर बाह्य जीव र जगतको बन्धनबाट मुक्त भएर स्वच्छन्द पूर्वक विचरण गर्छ भनिएको हो ।

# प्रकरण १५
# तत्वोपदेश

अष्टावक्र उवाच ॥

यथातथोपदेशेन कृतार्थः सत्त्वबुद्धिमान्।
आजीवमपि जिज्ञासुः परस्तत्र विमुह्यति ॥ १५-१॥

**भावार्थः** सात्विक विचार भएका बुद्धिमान व्यक्तिहरु थोरै, धेरै जति उपदेश पाए पनि ऋणी बन्छन् । यसको विपरित सात्विक विचार नभएकाहरु आजीवन जिज्ञासु हुँदा हुँदै पनि मोहग्रस्त हुन्छन् । धेरै शास्त्र पढेर ज्ञान प्राप्त हुँदैन् बरु थोरै शास्त्र पढेर साधना गऱ्यो भने ज्ञान प्राप्त हुन्छ । धेरै शास्त्र पढ्ने पनि मोह नै हो ।

मोक्षो विषयवैरस्यं बन्धो वैषयिको रसः ।
एतावदेव विज्ञानं यथेच्छसि तथा कुरु ॥ १५-२॥

**भावार्थः** विषय वैराग्य नै मोक्ष हो । विषय रस नै बन्धन । यो मात्र ज्ञान हो । अतः जस्तो इच्छा छ, त्यही गर ।

वाग्मिप्राज्ञामहोद्योगं जनं मूकजडालसम्।
करोति तत्त्वबोधोऽयमतस्त्यक्तो बुभुक्षभिः ॥ १५-३॥

**भावार्थः** यस प्रकारको तत्व वोधले वाकपटु, वोलक्कड तथा उद्योगी व्यक्तिलाई नबोल्ने, जड र अल्छी बनाउँछ । जसमा भोगको लिप्सा छ, त्यसको लागि यो परित्याग हुन्छ ।

न त्वं देहो न ते देहो भोक्ता कर्ता न वा भवान्।
चिद्रूपोऽसि सदा साक्षी निरपेक्षः सुखं चर ॥ १५-४॥

**भावार्थः** तिमी शरीर होइनौ, यो शरीर तिम्रो होइन, तिमी कर्ता पनि होइनौ, तिमी त चैतत्यरुपका साक्षी मात्र हौ । तसर्थ निरपेक्ष रहेर सुखको विचरण गर ।

रागद्वेषौ मनोधर्मौ न मनस्ते कदाचन ।
निर्विकल्पोऽसि बोधात्मा निर्विकारः सुखं चर ॥ १५-५॥

**भावार्थः** राग द्वेष मनको धर्म हो, तिम्रो होइन । तिम्रो मनसँग कुनै सम्बन्ध छैन । तिमी निर्विकल्प बोद्यात्मा हौं । अतः निर्विकार भसुखी भएर विचरण गर ।

सर्वभूतेषु चात्मानं सर्वभूतानि चात्मनि ।
विज्ञाय निरहङ्कारो निर्ममस्त्वं सुखी भव ॥ १५-६॥

**भावार्थः** सबै शरीरमा आत्मा र आत्मामा सबै शरीरलाई जान र अहङ्कार रहित र निर्मोही भएर तिमी सुखी होऊ ।

विश्वं स्फुरति यत्रेदं तरंगा इव सागरे ।
तत्त्वमेव न सन्देहश्चिन्मूर्ते विज्वरो भव ॥ १५-७॥

**भावार्थः** जहाँ यो विश्व तरङ्ग जस्तो देखिन्छ, त्यही तिमी छौं । यसमा कुनै सन्देह छैन । अतः हे चिन्मूर्ते, चैतन्यरुपी तिमी सन्ताप मुक्त होऊ ।

श्रद्धस्व तात श्रद्धस्व नात्र मोऽहं कुरुष्व भोः ।
ज्ञानस्वरूपो भगवानात्मा त्वं प्रकृतेः परः ॥ १५-८॥

**भावार्थः** हे वावु, श्रद्धा गर, मोह नगर । तिमी ज्ञान स्वरुप भगवानात्मा हौ । तिमी प्रकृति देखि टाढा छौं ।

गुणैः संवेष्टितो देहस्तिष्ठत्यायाति याति च ।
आत्मा न गंता नागंता किमेनमनुशोचसि ॥ १५-९॥

**भावार्थः** गुणहरु समावेश भएको हाम्रो शरीर छ । जसले आउदै र जादै गर्नु पर्छ तर आत्मा नजान्छ न आउँछ । तिमी किन शरीरका लागि चिन्ता लिन्छौं ।

देहस्तिष्ठतु कल्पान्तं गच्छत्वद्यैव वा पुनः ।
क्व वृद्धिः क्व च वा हानिस्तव चिन्मात्ररूपिणः ॥ १५-१०॥

**भावार्थः** यो शरीर युगौं युग सम्म रहे पनि र अहिले नै गए पनि जुन चैतत्य स्वरुप छ, त्यसलाई यसले न लाभ पुऱ्याउँछ वा हानी गर्छ ।

त्वय्यनंतमहाम्भोधौ विश्ववीचिः स्वभावतः ।
उदेतु वास्तमायातु न ते वृद्धिर्न वा क्षतिः ॥ १५-११॥

**भावार्थः** तिम्रो यो अनन्त महासागरमा विश्वरुपी तरंग छ । स्वभावैले यो तरंग उठ्छ र शान्त हुन्छ । यसबाट तिमीमा न वृद्धि हुन्छ न क्षति नै ।

तात चिन्मात्ररूपोऽसि न ते भिन्नमिदं जगत्।
अतः कस्य कथं कुत्र हेयोपादेयकल्पना ॥ १५-१२॥

**भावार्थः** हे वावु ! तिमी मात्र चैतत्यरुप हौ । तिम्रो यो जगत तिमीबाट भिन्न छैन । अतः हेय उपादेयको कल्पना कस्को बारेमा गर्छौ र किन गर्छौ ?

एकस्मिन्नव्यये शान्ते चिदाकाशेऽमले त्वयि ।
कुतो जन्म कुतो कर्म कुतोऽहङ्कार एव च ॥ १५-१३॥

**भावार्थः** यो एक तिमी मै व्यप्त छ, अविनाशी, शान्त र निर्मल चैतत्य आकाश छ । अतः तिम्रो जन्म कहाँ ? कर्म कहा ? र अहङ्कार कहाँ ?

यत्त्वं पश्यसि तत्रैकस्त्वमेव प्रतिभाससे ।
किं पृथक् भासते स्वर्णात्कटकांगदनूपुरम्॥ १५-१४॥

**भावार्थः** तिमी देख्छौं त्यसैमा तिम्रो प्रतिविम्ब हुन्छ के कंगन वाजुवन्द ( व्रासलेट, सिक्रि चुरा) नुपुर सुन भन्दा पृथक प्रतित हुन्छ ? यसमा अष्टावक्रले भन्न खोज्नु भएको द्वैतलाई छोड र अद्वैतलाई समाऊ । सुनबाटै गहना बनेको हुन, यीनको छुट्टै अस्तित्व छैन । त्यस्तै जीव, जगत, विश्व सबैको छुट्टै अस्तित्व छैन । केवल आत्माकै अभिन्न अंग हुन् । यसमा नै एकत्वको भाव छ ।

अयं सोऽहमयं नाहं विभागमिति संत्यज ।
सर्वमात्मेति निश्चित्य निःसङ्कल्पः सुखी भव ॥ १५-१५॥

**भावार्थः** म यो हुँ, यो होइन यस्तो विभाजनलाई छोड् । सर्वश्व आत्मा नै हो, यो निश्चित रुपले बुझि तिमी संकल्पमुक्त भएर सुखी होऊ ।

तवैवाज्ञानतो विश्वं त्वमेकः परमार्थतः ।
त्वत्तोऽन्यो नास्ति संसारी नासंसारी च कश्चन ॥ १५-१६॥

**भावार्थः** तिम्रो अज्ञानताको कारणले यो विश्व छ । परमार्थबाट तिमी एक हौं । तिमी बाहेक न कोही संसारी छ न त असंसारी नै ।

भ्रान्तिमात्रमिदं विश्वं न किंचिदिति निश्चयी ।
निर्वासनः स्फूर्तिमात्रो न किंचिदिव शाम्यति ॥ १५-१७॥

**भावार्थः** यो विश्व भ्रान्ति मात्र हो । यस बाहेक अरु केही होइन । यो अरु केही पनि होइन भन्ने निश्चय गर । कामनारहीत वा स्फूर्ति भएर शान्ति सिद्धी प्राप्त गर ।

एक एव भवाम्भोधावासीदस्ति भविष्यति ।
न ते बन्धोऽस्ति मोक्षो वा कृत्यकृत्यः सुखं चर ॥ १५-१८॥

**भावार्थः** यो भवसागरमा तिमी एकै थियौं, छौ र रहने छौ । अतः न तिम्रो यो बन्द हो न, त मोक्ष । तिमी कृत कृत्य भएर सुखमा विचरण गर ।

मा सङ्कल्पविकल्पाभ्यां चित्तं क्षोभय चिन्मय ।
उपशाम्य सुखं तिष्ठ स्वात्मन्यानन्दविग्रहे ॥ १५-१९॥

**भावार्थः** हे चिन्मय ! संकल्प-विकल्पबाट चित्तको क्षुब्ध न गर । चित्तलाई शान्त गरेर आनन्द भै स्वात्ममा सुखपूर्वक रहू ।

त्यजैव ध्यानं सर्वत्र मा किंचिद् हृदि धारय ।
आत्मा त्वं मुक्त एवासि किं विमृश्य करिष्यसि ॥ १५-२०॥

**भावार्थः** सबै कुराबाट ध्यान त्याग । हृदयमा किंचित पनि धारणा नबनाऊ । तिमी आत्मावत मुक्ति हौं । त्यसैले ध्यान किन गर्छौं । ध्यान पनि मोह नै हो । किन यसमा आशक्ति गर्छौ ।

# प्रकरण १६
# विशेष ज्ञानोपदेश

अष्टावक्र उवाच ॥

आचक्ष्व शृणु वा तात नानाशास्त्राण्यनेकशः ।
तथापि न तव स्वास्थ्यं सर्वविस्मरणाद् ऋते ॥ १६-१॥

**भावार्थः** बाबू अनेक शास्त्रहरुले नाना प्रकारले भनेका छन्, ती कुराहरु सुन तर ती सबै नबिर्सिएसम्म तिम्रो मुक्ति सम्भव छैन ।

भोगं कर्म समाधिं वा कुरु विज्ञ तथापि ते ।
चित्तं निरस्तसर्वाशमत्यर्थं रोचयिष्यति ॥ १६-२॥

**भावार्थः** हे सुविज्ञ । तिमी भोग गर, कर्म गर अथवा समाधि लगाऊ, तथापि ती सम्पूर्ण आशाहरु छोडे पछि मात्र तिम्रो चित्त आत्मा स्वरुप प्रतित हुन्छ ।

आयासात्सकलो दुःखी नैनं जानाति कश्चन ।
अनेनैवोपदेशेन धन्यः प्राप्नोति निर्वृतिम्॥ १६-३॥

**भावार्थः** प्राणी मात्र आयस प्रयास हुन तर कोही पनि यसलाई जान्दैनन् । यो उपदेश जान्ने मान्छे धन्य छ । किनकि उसले परमसुख प्राप्त गर्छ ।

व्यापारे खिद्यते यस्तु निमेषोन्मेषयोरपि ।
तस्यालस्य धुरीणस्य सुखं नन्यस्य कस्यचित्॥ १६-४॥

**भावार्थः** जो आँखा खोल्न र वन्द गर्न पनि दुःख मान्छ त्यस्ता अज्ञानीलाई आलस्यमा नै सुख मिल्छ । अरुमा हुँदैन ।

इदं कृतमिदं नेति द्वंद्वैर्मुक्तं यदा मनः ।
धर्मार्थकाममोक्षेषु निरपेक्षं तदा भवेत्॥ १६-५॥

**भावार्थः** यो करणीय छ र त्यो अकरणीय छ । यसैबाट मन जब द्वन्दमुक्त हुन्छ तब उ धर्म, अर्थ, काम र मोक्षबाट निरपेक्ष हुन्छ ।

विरक्तो विषयद्वेष्टा रागी विषयलोलुपः ।
ग्रहमोक्षविहीनस्तु न विरक्तो न रागवान्॥ १६-६॥

**भावार्थः** विरक्त व्यक्ति विषय द्वेषी र विषय लोलुप व्यक्ति रागी हुन्छन् तर ग्रहण र मोक्ष विहीन व्यक्ति नविरक्त हुन्छ न रागवान नै ।

हेयोपादेयता तावत्संसारविटपांकुरः ।
स्पृहा जीवति यावद् वै निर्विचारदशास्पदम्॥ १६-७॥

**भावार्थः** जब सम्म निर्विचारको स्थित बनी रहन्छ, तब सम्म ग्रहण र त्यागको भावना जीवित नै हुन्छ । यही संसारिक वृक्षको हाँगो र जरो हो ।

प्रवृत्तौ जायते रागो निर्वृत्तौ द्वेष एव हि ।
निर्द्वन्द्वो बालवद् धीमान्एवमेव व्यवस्थितः ॥ १६-८॥

**भावार्थः** प्रवृतिबाट राग र निवृतिबाट द्वेष उत्पन्न हुन्छ । अतः ज्ञान सम्पन्न व्यक्ति निद्वन्द भएर बालक जस्तै भएर रहनु पर्छ ।

हातुमिच्छति संसारं रागी दुःखजिहासया ।
वीतरागो हि निर्दुःखस्तस्मिन्नपि न खिद्यति ॥ १६-९॥

**भावार्थः** रागी दुखबाट मुक्ति पाउनका लागि संसार त्याग गर्ने इच्छा गर्छन् । वीतरागी दुखविहीन हुँदाहुँदै पनि संसारमै रहेर पनि खेदको अनुभूति गर्दैनन् ।

यस्याभिमानो मोक्षेऽपि देहेऽपि ममता तथा ।
न च ज्ञानी न वा योगी केवलं दुःखभागसौ ॥ १६-१०॥

**भावार्थः** जसलाई मोक्षप्रति अभिमान छ, शरीरप्रति ममता छ, । त्यो न ज्ञानी हो न त योगी । उ केवल दुखभोग गर्ने मात्र हुन्छ ।

हरो यद्युपदेष्टा ते हरिः कमलजोऽपि वा ।
तथापि न तव स्वाथ्यं सर्वविस्मरणादृते ॥ १६-११॥

**भावार्थः** शीव, विष्णु, कमलको फूलमा बसेका ब्रह्मा पनि तिम्रा गुरु हुन । जब सम्म सबै कुरा बिर्सिदैनौ तव सम्म तिमी आफू भित्र पाउँदैनौ ।

# प्रकरणम १७

# तत्व स्वरुप

अष्टावक्र उवाच ॥

तेन ज्ञानफलं प्राप्तं योगाभ्यासफलं तथा ।
तृप्तः स्वच्छेन्द्रियो नित्यं एकाकी रमते तु यः ॥ १७-१॥

**भावार्थः** जो सन्तुष्ट छ, जसका इन्द्रियहरु स्वच्छ छन् र जो सधै एकमा नै रमाउँछन् । तिनीहरुले नै ज्ञानफल र योगाभ्यासको फल प्राप्त गर्छन् ।

न कदाचिज्जगत्यस्मिन्तत्त्वज्ञो हन्त खिद्यति ।
यत एकेन तेनेदं पूर्णं ब्रह्माण्डमण्डलम्॥ १७-२॥

**भावार्थः** हे हन्त ! जब तत्वज्ञ व्यक्ति जगतबाट कहिल्यै पनि दुखित हुदैन तब यो ब्रह्माण्ड मंडलको पूर्णता प्राप्त हुन्छ र यस भित्र नै आफूलाई पाउँछ ।

न जातु विषयाः केऽपि स्वारामं हर्षयन्त्यमी ।
सल्लकीपल्लवप्रीतमिवेभं निम्बपल्लवाः ॥ १७-३॥

**भावार्थः** विषयहरुले कुनै किसिमले पनि आत्मस्वरुपलाई कहिल्यै हर्षित गराउँदैनन् । जस्तो कि नीमको पातले हात्तीलाई खुशी गराउन सक्दैन । उसले सालको पात नै खोज्छ ।

यस्तु भोगेषु भुक्तेषु न भवत्यधिवासितः ।
अभुक्तेषु निराकांक्षी तादृशो भवदुर्लभः ॥ १७-४॥

**भावार्थः** जो भुक्त भोगले अधिवासित र मख्ख पर्दैन त्यो त अमुक्तप्रति निरकांक्षी हुन्छ । यस्तो व्यक्ति यो भवसागरमा भेट्न मुश्किल पर्छ ।

बुभुक्षुरिह संसारे मुमुक्षुरपि दृश्यते ।
भोगमोक्षनिराकांक्षी विरलो हि महाशयः ॥ १७-५॥

**भावार्थः** यो संसारमा भोगको इच्छा गर्ने व्यक्ति र मोक्षको इच्छा गर्ने व्यक्ति धेरै दृष्टिगोचर गर्छन् तर भोग इच्छा र मोक्ष इच्छाबाट निराकांक्षित महानुभाव विरलै भेटिन्छन् ।

धर्मार्थकाममोक्षेषु जीविते मरणे तथा ।
कस्याप्युदारचित्तस्य हेयोपादेयता न हि ॥ १७-६॥

**भावार्थः** जो उदार चित्तका हुन्छन्, उनीहरु धर्म, अर्थ, काम मोक्ष, जन्म, मरण तथा हेय र उपादेयको भावनाबाट मुक्त हुन्छन् ।

वाञ्छा न विश्वविलये न द्वेषस्तस्य च स्थितौ ।
यथा जीविकया तस्माद् धन्य आस्ते यथा सुखम्॥ १७-७॥

**भावार्थः** जसलाई विश्व ब्रहमाण्डको विलयको वान्छना वा इच्छा छैन न त निरन्तर रिस, त्यस्तो व्यक्ति यथाजीविकाबाटै यथासुख प्राप्त गर्छन् ।

कृतार्थोऽनेन ज्ञानेनेत्येवं गलितधीः कृती ।
पश्यन्शृण्वन्स्पृशन्जिघ्रन्न् अश्नन्नास्ते यथा सुखम्॥ १७-८॥

**भावार्थः** म तत्व ज्ञानबाट कृतार्थ भएको छु । यस्तो पुरुषको बाहिरी बुद्धि नष्ट हुन्छ तर भित्रि बुद्धि आउँछ । यो सुनेर स्पर्श गरेर सुँघेर र खाएर यथा सुखको प्राप्त हुन्छ ।

शून्या दृष्टिर्वृथा चेष्टा विकलानीन्द्रियाणि च ।
न स्पृहा न विरक्तिर्वा क्षीणसंसारसागरे ॥ १७-९॥

**भावार्थः** जुन व्यक्तिको संसाररुपी सागर क्षीण छ, दृष्टि शुन्य छ, चेष्टाहरु व्यर्थ इन्द्रियहरु अपाङ्ग छन् यस्ता व्यक्तिको न इच्छा हुन्छन् न विरक्ति नै ।

न जागर्ति न निद्राति नोन्मीलति न मीलति ।
अहो परदशा क्वापि वर्तते मुक्तचेतसः ॥ १७-१०॥

**भावार्थः** जो न जाग्रतमा छ न निन्द्रामा छ, न परेला खोल्छ न बन्द गर्छ, यो आश्चर्य छ कि यस्तो मुक्त चित्र सर्वोत्तमा स्थित हुन्छ ।

सर्वत्र दृश्यते स्वस्थः सर्वत्र विमलाशयः ।
समस्तवासना मुक्तो मुक्तः सर्वत्र राजते ॥ १७-११॥

**भावार्थः** मुक्तव्यक्ति सम्पूर्ण दृष्यहरुबाट मुक्त भएर शान्तिपूर्वक सर्वत्र विमल निवाश गर्छ । सबै वासनाबाट मुक्ति पाएर ऊ सर्वत्र विराजित हुन्छ ।

पश्यन्शृण्वन्स्पृशन्जिघ्रन्न्अश्नन्
ईहितानीहितैर्मुक्तो मुक्त एव महाशयः ॥ १७-१२॥

**भावार्थः** देख्दा, सुन्दा, छुँदा, सुँघ्दा, खाना, ग्रहण गर्दा, बोल्दा खेरी जो इच्छा-द्वेष आदिबाट मुक्त हुन्छ, ती महाशयले मुक्ति प्राप्त गर्नुहुन्छ ।

न निन्दति न च स्तौति न हृष्यति न कुप्यति ।
न ददाति न गृण्हाति मुक्तः सर्वत्र नीरसः ॥ १७-१३॥

**भावार्थः** जा निन्दा गर्दैनन्, प्रशंसा पनि गर्दैनन्, खुशी पनि हुँदैन, रिसाउदैन पनि, दिदैन र लिदैन पनि । यस्ता मुक्त व्यक्ति निर्लेप हुन्छ ।

सानुरागां स्त्रियं दृष्ट्वा मृत्युं वा समुपस्थितम्।
अविह्वलमनाः स्वस्थो मुक्त एव महाशयः ॥ १७-१४॥

**भावार्थः** प्रेमातुर स्त्री अथवा मृत्यु नजिक देखेर पनि जसको चित्त अविचलित हुन्छ त्यस्तो व्यक्ति शान्त र मुक्त हुन्छ ।

सुखे दुःखे नरे नार्यां सम्पत्सु च विपत्सु च ।
विशेषो नैव धीरस्य सर्वत्र समदर्शिनः ॥ १७-१५॥

**भावार्थः** सुख दुख, नर नारी, सम्पत्ति र विपत्ति तथा अरु सवैप्रति जो समदर्शी छ । यस्तो धीरका कुनै पनि विशेषता हुँदैन ।

न हिंसा नैव कारुण्यं नौद्धत्यं न च दीनता ।
नाश्चर्यं नैव च क्षोभः क्षीणसंसरणे नरे ॥ १७-१६॥

**भावार्थः** जुन व्यक्तिको संसार क्षीण हुन्छ । यस्तो व्यक्तिमा न हिंसा हुन्छ न करुणा नै, न उद्धत हुन्छ न त दीन दुखी नै । उसमा न त आश्चर्य हुन्छ न त क्षोभ नै ।

न मुक्तो विषयद्वेष्टा न वा विषयलोलुपः ।
असंसक्तमना नित्यं प्राप्ताप्राप्तमुपाश्नुते ॥ १७-१७॥

**भावार्थः** मुक्त व्यक्ति न विषय दोषी हुन्छ न विषय लोलुप वा लिप्त । उसको सदा अनाशक्त मन हुन्छ अथवा उसले प्राप्त र अप्राप्तको भोग गर्छ ।

समाधानसमाधानहिताहितविकल्पनाः ।
शून्यचित्तो न जानाति कैवल्यमिव संस्थितः ॥ १७-१८॥

**भावार्थः** शुन्यचित्त व्यक्ति आत्मस्थित हुन्छ । त्यो व्यक्ति शङ्का समाधान, हित अहित र विकल्पनाबाट अनभिज्ञ हुन्छ ।

निर्ममो निरहंकारो न किंचिदिति निश्चितः ।
अन्तर्गलितसर्वाशः कुर्वन्नपि करोति न ॥ १७-१९॥

**भावार्थः** जसका सबै आशाहरु अन्तर्मन नै नष्ट हुन्छन् र उसले आत्मा बाहेक अरु केही देख्दैनन् । यसबाट यो निश्चय हुन्छ कि त्यो व्यक्ति निर्मोही र अहङ्कार हीन हुन्छ र क्रियाशील हुँदा हुँदै पनि त्यस्तो क्रियामा लिप्त हुँदैन ।

मनःप्रकाशसंमोहस्वप्नजाड्यविवर्जितः ।
दशां कामपि सम्प्राप्तो भवेद् गलितमानसः ॥ १७-२०॥

**भावार्थः** जसको मनका आशा गलेका छन्, उ मनको आलोक शान्ति तथा सपना वा जड्ताबाट वंचित भएर पनि अलौकिक दशा प्राप्त गर्दछ ।

# प्रकरण १८

## शम

अष्टावक्र उवाच ॥

यस्य बोधोदये तावत्स्वप्नवद् भवति भ्रमः ।
तस्मै सुखैकरूपाय नमः शान्ताय तेजसे ॥ १८-१ ॥

**भावार्थः** जसका आत्मावोधबाट भ्रान्तिहरु सपना जस्तै हुन्छन् । त्यो सुखरुपी शान्त र तेजश्वीलाई नमस्कार छ ।

अर्जयित्वाखिलान्अर्थान्भोगानाप्नोति पुष्कलान्।
न हि सर्वपरित्यागमन्तरेण सुखी भवेत्॥ १८-२॥

**भावार्थः** विपुल धन आर्जित गर्ने पुरुषले, समस्त योग त अवश्य प्राप्त गर्छन् तर सबै परित्याग नगरिकन सुखी हुँदैन ।

कर्तव्यदुःखमार्तण्डज्वालादग्धान्तरात्मनः ।
कुतः प्रशमपीयूषधारासारमृते सुखम्॥ १८-३॥

**भावार्थः** कर्महरुका दुखहरु सूर्यका ज्वालाबाट प्रज्वलित हुन्छन्, जसको अन्तर्मन दग्ध (प्रशन्न) हुन्छ । उसलाई शान्तिको र अमृतधाराको वर्षाविना सुख कहाँ हुन्छ ?

भवोऽयं भावनामात्रो न किंचित्परमर्थतः ।
नास्त्यभावः स्वभावानां भावाभावविभाविनाम्॥ १८-४॥

**भावार्थः** यो भवसंसार भावना मात्र हो । परम अर्थ केही पनि होइन, त्यसकारण भाव अभावमा स्थित स्वभावको अभाव हुँदैन ।

न दूरं न च संकोचाल्लब्धमेवात्मनः पदम्।
निर्विकल्पं निरायासं निर्विकारं निरंजनम्॥ १८-५॥

**भावार्थः** निर्विकल्प, निरायास, निर्विकार, निरन्जन आत्मपद न त टाढा छ, न साँगुरो नै छ त्यो सबैतिर उपलब्ध छ ।

व्यामोहमात्रविरतौ स्वरूपादानमात्रतः ।
वीतशोका विराजन्ते निरावरणदृष्टयः ॥ १८-६॥

**भावार्थः** निरावृत दृष्टि (नेत्र आवरण हटाउनाले) र व्यमोह मात्रले विरत स्वरुप प्राप्त गर्ने ज्ञान नै आत्मापदमा सुशोभित हुन्छ ।

समस्तं कल्पनामात्रमात्मा मुक्तः सनातनः ।
इति विज्ञाय धीरो हि किमभ्यस्यति बालवत्॥ १८-७॥

**भावार्थः** यो संसार पुरै कल्पना मात्र हो । आत्मा सनातन र मुक्त छ, यसमा विज्ञ भएर पनि धीर ज्ञानी वलावत व्यवहार गर्न सक्छन् ।

आत्मा ब्रह्मेति निश्चित्य भावाभावौ च कल्पितौ ।
निष्कामः किं विजानाति किं ब्रूते च करोति किम्॥ १८-८॥

**भावार्थः** आत्मा व्रह्म हो र भाव अभाव केवल कल्पित हो । जसलाई यो कुरा निश्चय हुन्छ, उसले के बोल्छ र के गर्छ ।

अयं सोऽहमयं नाहं इति क्षीणा विकल्पना ।
सर्वमात्मेति निश्चित्य तूष्णीम्भूतस्य योगिनः ॥ १८-९॥

**भावार्थः** आत्मा नै सर्वस्व हो, जसलाई यो निश्चय हुन्छ । उ मौन योगी जस्तै म यो हुँ, म यो होइन, यी सबै कल्पनाहरु क्षीण हुँदै जान्छन् ।

न विक्षेपो न चैकाग्र्यं नातिबोधो न मूढता ।

न सुखं न च वा दुःखं उपशान्तस्य योगिनः ॥ १८-१०॥

**भावार्थः** प्रशान्तयोगी न विक्षेप हुन्छ न त एकाग्रह, न उसमा अति बोध हुन्छ न त मुदता(अज्ञानी), न उ सुखमा हुन्छ न त दुखमै ।

स्वाराज्ये भैक्षवृत्तौ च लाभालाभे जने वने ।
निर्विकल्पस्वभावस्य न विशेषोऽस्ति योगिनः ॥ १८-११॥

**भावार्थः** निर्विकल्प स्वभावका लागि स्वराज्य र भिक्षावृत्ति, लाभ र हानी, जन र वनमा विशेष कुनै अन्तर हुँदैन ।

क्व धर्मः क्व च वा कामः क्व चार्थः क्व विवेकिता ।
इदं कृतमिदं नेति द्वन्द्वैर्मुक्तस्य योगिनः ॥ १८-१२॥

**भावार्थः** यो गर्‍यो, यो गरेन, यी द्वन्दबाट मुक्त योगीको लागि धर्म कहाँ, कर्म कहाँ र ज्ञान कहाँ ?

कृत्यं किमपि नैवास्ति न कापि हृदि रंजना ।
यथा जीवनमेवेह जीवन्मुक्तस्य योगिनः ॥ १८-१३॥

**भावार्थः** जीवनमुक्त योगीको लागि यो लोकमा कुनै अनुकरणीय कुरा हुँदैन । न त वहाँको ह्रदयमा रञ्जना नै हुन्छ । वहाँले यो जीवनलाई जिती सक्नु भएको छ ।

क्व मोहः क्व च वा विश्वं क्व तद् ध्यानं क्व मुक्तता ।
सर्वसंकल्पसीमायां विश्रान्तस्य महात्मनः ॥ १८-१४॥

**भावार्थः** सर्व संकल्पहरुहीन भएको (स्वतन्त्र भएको) महात्माको मोह कहाँ, विश्व कहाँ, ध्यान कहाँ र मुक्ति कहाँ ?

येन विश्वमिदं दृष्टं स नास्तीति करोतु वै ।
निर्वासनः किं कुरुते पश्यन्नपि न पश्यति ॥ १८-१५॥

**भावार्थः** जसलाई विश्व जस्तो दृष्टि गोचर भइरहेको छ, उसले जान्दछ कि यो त्यस्तो छैन, केवल देखेको कुरा पनि देख्दैन । यस्तो वासनारहित व्यक्तिले के गर्छ ?

येन दृष्टं परं ब्रह्म सोऽहं ब्रह्मेति चिन्तयेत्।
किं चिन्तयति निश्चिन्तो द्वितीयं यो न पश्यति ॥ १८-१६॥

**भावार्थः** जसले परमव्रह्मको अवलोकन गरिसक्नु भएको छ । त्यो म नै व्रह्म हुँ । यही सोच्नु हुन्छ तर जसले दोस्रो केही पनि छैन भन्ने बोध गर्नुभएको छ, वहाँले के सोच्नु हुन्छ ?

दृष्टो येनात्मविक्षेपो निरोधं कुरुते त्वसौ ।
उदारस्तु न विक्षिप्तः साध्याभावात्करोति किम्॥ १८-१७॥

**भावार्थः** जसले आत्मा विक्षपलाई देखी सक्नु भएको छ, वहाँले मनलाई वसमा राख्नु हुन्छ । उदारमना विक्षिप्त हुँदैन, वहाँले साध्यको अभावमा के गर्नु हुन्छ ?

धीरो लोकविपर्यस्तो वर्तमानोऽपि लोकवत्।
न समाधिं न विक्षेपं न लोपं स्वस्य पश्यति ॥ १८-१८॥

**भावार्थः** लोक व्यवहारबाट विपरीत भएर जो लोकमै रहनु हुन्छ वहाँले न समाधि देख्नु हुन्छ, न विक्षेप, न बन्धन, वहाँ धीर ज्ञानी व्यक्ति हुनुहुन्छ ।

भावाभावविहीनो यस्तृप्तो निर्वासनो बुधः ।
नैव किंचित्कृतं तेन लोकदृष्ट्या विकुर्वता ॥ १८-१९॥

**भावार्थः** जो ज्ञानी तृप्त छ, उ भाव अभाव विहिन तथा निर्वासना हुन्छ । दुनियाँको नजरमा काम गरिरहेको देखिए पनि उसले केही गरेको हुँदैन ।

प्रवृत्तौ वा निवृत्तौ वा नैव धीरस्य दुर्ग्रहः ।

यदा यत्कर्तुमायाति तत्कृत्वा तिष्ठतः सुखम्॥ १८-२०॥

**भावार्थः** धीरको सामुन्ने जस्तो सुकै कर्म आइपरेपनि कर्म गरेर सुखमा रहन्छ । त्यो धीरपुरुष प्रवृति र निवृतिको दुराग्रह गर्दैन ।

निर्वासनो निरालम्बः स्वच्छन्दो मुक्तबन्धनः ।
क्षिप्तः संस्कारवातेन चेष्टते शुष्कपर्णवत्॥ १८-२१॥

**भावार्थः** वासनारहित निरालम्बी स्वच्छन्द र वन्धन मुक्त ज्ञानी संसारिक वायुबाट विक्षप्त सुख पाए जस्तो भ्रान्ति चेष्टा गर्छ ।

असंसारस्य तु क्वापि न हर्षो न विषादता ।
स शीतलमना नित्यं विदेह इव राजये ॥ १८-२२॥

**भावार्थः** असंसारीलाई न कहिल्यै हर्ष हुन्छ न विषाद नै । उ सदा शीतलमना विदेह जस्तै विराजित हुन्छ ।

कुत्रापि न जिहासास्ति नाशो वापि न कुत्रचित्।
आत्मारामस्य धीरस्य शीतलाच्छतरात्मनः ॥ १८-२३॥

**भावार्थः** शितलातबाट आच्छादित जसको चित्तमा आत्मा रमाउँछ, यस्तो धीर पुरुषको न कुनै त्यागको इच्छा हुन्छ न त कुनै प्राप्तीको आशा नै ।

प्रकृत्या शून्यचित्तस्य कुर्वतोऽस्य यदृच्छया ।
प्राकृतस्येव धीरस्य न मानो नावमानता ॥ १८-२४॥

**भावार्थः** प्रकृतिबाटै जसको चित्त शुन्य छ, र प्रारब्ध अनुसार कर्म गर्छ, यस्तो धीरज्ञानीमा अज्ञानी जस्तै न मानमा हुन्छ न अपमानमा ।

कृतं देहेन कर्मेदं न मया शुद्धरूपिणा ।
इति चिन्तानुरोधी यः कुर्वन्नपि करोति न ॥ १८-२५॥

**भावार्थः** यो कर्म त शरीरले गर्छ । 'म' शुद्ध रुपले गर्ने होइन यस्तो विचार गर्ने व्यक्ति कर्म गरिरहे पनि कर्म गरेको हुँदैन ।

अतद्वादीव कुरुते न भवेदपि बालिशः ।
जीवन्मुक्तः सुखी श्रीमान्संसरन्नपि शोभते ॥ १८-२६॥

**भावार्थः** जीवनमुक्त ज्ञानी यसको विपरीत "म कर्ता हुँ " भनेर कर्म गरिरहे पनि मूर्ख हुँदैन । अत एवं जो संसारिक कर्म गर्दा गर्दै पनि सुख सम्पन्नबाट शोभा प्राप्त हुन्छ ।

नानाविचारसुश्रान्तो धीरो विश्रान्तिमागतः ।
न कल्पते न जाति न शृणोति न पश्यति ॥ १८-२७॥

**भावार्थः** नाना प्रकारका विचारबाट मुक्त भएर जसले विश्रान्ति गर्छन् । यस्तो धीर व्यक्ति न कल्पना गर्छ, न जान्दछ, न सुन्छ अथवा न देख्छ नै ।

असमाधेरविक्षेपान्न मुमुक्षुर्न चेतरः ।
निश्चित्य कल्पितं पश्यन्ब्रह्मैवास्ते महाशयः ॥ १८-२८॥

**भावार्थः** ज्ञानी असमाधिमा पनि विक्षिप्त वा जिज्ञाशु हुँदैन । सवै कुरा कल्पित हो । यस्तो निश्चित कुरा बुझेपछि ब्रह्मस्वरुप प्राप्तहुन्छ ।

यस्यान्तः स्यादहंकारो न करोति करोति सः ।
निरहंकारधीरेण न किंचिदकृतं कृतम्॥ १८-२९॥

**भावार्थः** जसका अन्तस्करणमा अहङ्कार छ । उसले कर्म नगरे पनि कर्म गरिरहेको हुन्छ । जबकि अहङ्कारहीन धीरज्ञानी कर्म गरे पनि केही गरिरहेको हुँदैन ।

नोद्विग्नं न च सन्तुष्टमकर्तृ स्पन्दवर्जितम्।
निराशं गतसन्देहं चित्तं मुक्तस्य राजते ॥ १८-३०॥

**भावार्थः** मुक्त चित्त न उद्विग्न हुन्छ, न सन्तुष्ट, त्यो कर्तव्यरहित र स्पंदनहीन हुन्छ । आशा र सन्देहबाट मुक्तचित्तमा विराजमान हुन्छ ।

निर्ध्यातुं चेष्टितुं वापि यच्चित्तं न प्रवर्तते ।
निर्निमित्तमिदं किंतु निर्ध्यायेति विचेष्टते ॥ १८-३१॥

**भावार्थः** जसको चित्त निष्क्रिय र चेष्टा मै निवृत छैन तर पनि उ स्थीर भएर बिना कुनै निमित्तको चेष्टाहरु गर्छन् ।

तत्त्वं यथार्थमाकर्ण्य मन्दः प्राप्नोति मूढताम्।
अथवा याति संकोचममूढः कोऽपि मूढवत्॥ १८-३२॥

**भावार्थः** मन्दबुद्धी भएका यथार्थ कुरा सुनेर मूर्खता वा संकोच प्राप्त गर्छन् तर ज्ञानी मूर्ख भए पनि समाधिस्थ हुन्छन् ।

एकाग्रता निरोधो वा मूढैरभ्यस्यते भृशम्।
धीराः कृत्यं न पश्यन्ति सुप्तवत्स्वपदे स्थिताः ॥ १८-३३॥

**भावार्थः** मूर्ख, एकाग्रहता र निरोधको बहुत अभ्यास गर्छ तर धीरज्ञानी स्वपदमै स्थित सुप्तवत भै कुनै कर्म नै देख्दैन ।

अप्रयत्नात्प्रयत्नाद् वा मूढो नाप्नोति निर्वृतिम्।
तत्त्वनिश्चयमात्रेण प्राज्ञो भवति निर्वृतः ॥ १८-३४॥

**भावार्थः** मूर्ख अप्रयत्न र प्रयत्नबाट निवृत्तिको प्राप्त हुँदैन । केवल विज्ञ व्यक्तिले मात्र तत्वलाई निश्चित गरेर निवृत्त हुन्छ ।

शुद्धं बुद्धं प्रियं पूर्णं निष्प्रपंचं निरामयम्।
आत्मानं तं न जानन्ति तत्राभ्यासपरा जनाः ॥ १८-३५॥

**भावार्थः** जसले अभ्यास गर्छ, त्यस्तो व्यक्तिले शुद्ध, बुद्ध, प्रिय, पूर्ण, निष्प्रपञ्च र निरामय आत्मालाई जान्न सक्दैन ।

नाप्नोति कर्मणा मोक्षं विमूढोऽभ्यासरूपिणा ।
धन्यो विज्ञानमात्रेण मुक्तस्तिष्ठत्यविक्रियः ॥ १८-३६॥

**भावार्थः** विमूढ व्यक्तिले अभ्यास रुपी कर्मबाट मोक्ष प्राप्त गर्नसक्दैन । केवल ज्ञानीले मात्र ज्ञानबाट मुक्ति प्राप्त गर्न सक्छ ।

मूढो नाप्नोति तद् ब्रह्म यतो भवितुमिच्छति ।
अनिच्छन्नपि धीरो हि परब्रह्मस्वरूपभाक् ॥ १८-३७॥

**भावार्थः** मूर्ख मान्छे जसरी ब्रहम हुने इच्छा गर्छ, त्यसरी उसलाई ब्रह्म प्राप्त हुँदैन । धीर ज्ञानी अनिच्छित भएर पनि परब्रह्म स्वरुपलाई भजन गर्दछ ।

निराधारा ग्रहव्यग्रा मूढाः संसारपोषकाः ।
एतस्यानर्थमूलस्य मूलच्छेदः कृतो बुधैः ॥ १८-३८॥

**भावार्थः** मूर्ख व्यक्ति निराधार र दुराग्रही र संसारको पोषक हो । ज्ञानी अनर्थ दुःखको मूल जरालाई नै काट्दछ ।

न शान्तिं लभते मूढो यतः शमितुमिच्छति ।
धीरस्तत्त्वं विनिश्चित्य सर्वदा शान्तमानसः ॥ १८-३९॥

**भावार्थः** मूर्ख व्यक्ति जुन प्रकारले शान्तिको कामना गर्छ, त्यस प्रकारबाट शान्ति प्राप्त हुन सक्तैन । धीर ज्ञानी तत्व प्राप्त गरेर सधै शान्त चित्त रहन्छ ।

क्वात्मनो दर्शनं तस्य यद् दृष्टमवलम्बते ।
धीरास्तं तं न पश्यन्ति पश्यन्त्यात्मानमव्ययम्॥ १८-४०॥

**भावार्थः** जो दुष्टको बाटो अवलम्बन गर्छ, उसलाई कहाँ आत्मादर्शन मिल्छ ? धीर ज्ञानीले संसारिक वस्तु देख्दैन किन्तु अव्यय र अंविनाशी आत्मा देख्छ ।

क्व निरोधो विमूढस्य यो निर्बन्धं करोति वै ।
स्वारामस्यैव धीरस्य सर्वदासावकृत्रिमः ॥ १८-४१॥

**भावार्थः** जुन अज्ञानी बलपूर्वक निर्बन्ध हुन चाहन्छ, उसको चित्तको निरोध कहाँ हुन्छ ? स्वयंमा रमाउँदै धीर ज्ञानीको चित्त वास्तविक रुपमा निरोध हुन्छ ।

भावस्य भावकः कश्चिन्न किंचिद् भावकोपरः ।
उभयाभावकः कश्चिद् एवमेव निराकुलः ॥ १८-४२॥

**भावार्थः** कोही भावलाई मान्छन् कोही केही पनि मान्दैनन् र "केही पनि छैन" भन्ने बोध गर्छन् । जुन व्यक्ति यी दुवैलाई मान्दैन, ऊ निराकुल हुन्छ ।

शुद्धमद्वयमात्मानं भावयन्ति कुबुद्धयः ।
न तु जानन्ति संमोहाद्यावज्जीवमनिर्वृताः ॥ १८-४३॥

**भावार्थः** कुबुद्धिबाट ग्रस्तव्यक्ति शुद्ध र अद्वैय आत्माको भावना गर्छन् तर मोहवश उसले जान्न सक्दैन र आजीव अनिवृत्ति भईरहन्छ अथवा वृत्तिहरुको दास हुन्छ ।

मुमुक्षोर्बुद्धिरालम्बमन्तरेण न विद्यते ।
निरालम्बैव निष्कामा बुद्धिर्मुक्तस्य सर्वदा ॥ १८-४४॥

**भावार्थः** ज्ञान-पिपासु व्यक्तिको वुद्धि आलम्बनको आश्रय लिन्छ । मुक्त व्यक्तिको वुद्धि सधैं निरालम्ब र निष्काम हुन्छ ।

विषयद्वीपिनो वीक्ष्य चकिताः शरणार्थिनः ।
विशन्ति झटिति क्रोडं निरोधैकाग्रसिद्धये ॥ १८-४५॥

**भावार्थः** विषय-व्याघ्रको देखेर भयआक्रान्त व्यक्ति शरण पाउने र चित्तको निरोध गर्न एकाग्रता हुने हेतुले गुहामा प्रवेश गर्छन् ।

निर्वासनं हरिं दृष्ट्वा तूष्णीं विषयदन्तिनः ।
पलायन्ते न शक्तास्ते सेवन्ते कृतचाटवः ॥ १८-४६॥

**भावार्थः** विषयरुपी हात्ती वासनारहित सिंहलाई देखेर चुपचाप पलायन हुन्छ । अथवा आशक्त चाटुकार जस्तै गरेर उसैको सेवा गर्छ ।

न मुक्तिकारिकां धत्ते निःशङ्को युक्तमानसः ।
पश्यन्शृण्वन्स्पृशन्जिघ्रन्नश्नन्नास्ते यथासुखम्॥ १८-४७॥

**भावार्थः** निःशंक, सन्देह, मुक्त, धीर, गंभीरमन भएको ज्ञानी, मुक्तिको लागि योगाभ्यास गर्दैनन् । उनी सुन्दा, छुँदा र खाँदा पनि यथाखुशी हुन्छन् ।

वस्तुश्रवणमात्रेण शुद्धबुद्धिर्निराकुलः ।
नैवाचारमनाचारमौदास्यं वा प्रपश्यति ॥ १८-४८॥

**भावार्थः** वास्तविकताको सुन्ने मात्र गर्दा पनि शुद्ध वुद्ध र निराकुल ज्ञानी आचार अनाचार तथा उदासिनता देख्दैनन् ।

यदा यत्कर्तुमायाति तदा तत्कुरुते ऋजुः ।
शुभं वाप्यशुभं वापि तस्य चेष्टा हि बालवत्॥ १८-४९॥

**भावार्थः** जस्तोसुकै शुभ र अशुभ कर्म आइपरे पनि ज्ञानी व्यक्ति आग्रहरहित भएर गर्छ । उसको चेष्टा बच्चाको जस्तै हुन्छ ।

स्वातंत्र्यात्सुखमाप्नोति स्वातंत्र्याल्लभते परम्।
स्वातंत्र्यान्निर्वृतिं गच्छेत्स्वातंत्र्यात्परमं पदम्॥ १८-५०॥

**भावार्थः** ज्ञानीलाई स्वतन्त्रताबाट सुख र आनन्द तथा निवृत्ति प्राप्तहुन्छ । यसबाट उसलाई परमपद प्राप्त हुन्छ ।

अकर्तृत्वमभोक्तृत्वं स्वात्मनो मन्यते यदा ।

तदा क्षीणा भवन्त्येव समस्ताश्चित्तवृत्तयः ॥ १८-५१॥

**भावार्थः** जब स्वात्माको अकर्तृत्व र अभोक्तृत्वको ज्ञान हुन्छ । तब उसका सम्पूर्ण चित्तवृत्तिहरु हराएर जान्छन् ।

उच्छृंखलाप्यकृतिका स्थितिर्धीरस्य राजते ।
न तु सस्पृहचित्तस्य शान्तिर्मूढस्य कृत्रिमा ॥ १८-५२॥

**भावार्थः** धीरज्ञानी व्यक्तिको उच्छृंखलता पनि वास्तविक स्थितिमा सुहाउँछ तर सस्पृहचित्त भएको मूर्खको कृत्रिम शान्ति पनि सुहाउँदैन ।

विलसन्ति महाभोगैर्विशन्ति गिरिगह्वरान्।
निरस्तकल्पना धीरा अबद्धा मुक्तबुद्धयः ॥ १८-५३॥

**भावार्थः** संकल्पहरु - विकल्पहरुरहित, वन्धनविहीन, स्वतन्त्र वुद्धिवाला, धीर ज्ञानीले कहिलेकाही महाभोगको विलास गर्छन् तर पनि उनीहरु गिरि-गहरामा नै प्रवेश गर्छन् ।

श्रोत्रियं देवतां तीर्थमङ्गनां भूपतिं प्रियम्।
दृष्ट्वा सम्पूज्य धीरस्य न कापि हृदि वासना ॥ १८-५४॥

**भावार्थः** ब्राह्मण, देवता, तीर्थको पूजा गरेको देख्दा, सुन्दर नारी, राजा र प्रिय पात्र देख्दा पनि ज्ञानीको हृदयमा बासना उत्पन्न हुदैन ।

भृत्यैः पुत्रैः कलत्रैश्च दौहित्रैश्चापि गोत्रजैः ।
विहस्य धिक्कृतो योगी न याति विकृतिं मनाक् ॥ १८-५५॥

**भावार्थः** ज्ञानी योगी सेवक, पुत्र, पत्नि, नातिहरु र नाता सम्बन्ध पर्ने व्यक्तिहरुबाट धिक्कार पाएर पनि कुनै विकार प्राप्त गर्दैनन् ।

सन्तुष्टोऽपि न सन्तुष्टः खिन्नोऽपि न च खिद्यते ।
तस्याश्चर्यदशां तां तां तादृशा एव जानते ॥ १८-५६॥

**भावार्थः** योगी, ज्ञानी सन्तुष्ट हुँदाहुँदै पनि सन्तुष्ट हुँदैनन्, खिन्न हुँदा हुँदै पनि विषण्ण हुँदैन । यही आश्चर्यजनक दशाहरुलाई पनि उसले ज्ञान नै सम्झन सक्छन् ।

कर्तव्यतैव संसारो न तां पश्यन्ति सूरयः ।
शून्याकारा निराकारा निर्विकारा निरामयाः ॥ १८-५७॥

**भावार्थः** संसार कर्तव्यको नै अर्को नाम हो । ज्ञानीले संसारलाई शुन्य, निराकार, निर्विकार तथा निरामय देख्दैनन् ।

अकुर्वन्नपि सङ्क्षोभाद् व्यग्रः सर्वत्र मूढधीः ।
कुर्वन्नपि तु कृत्यानि कुशलो हि निराकुलः ॥ १८-५८॥

**भावार्थः** मूर्खव्यक्ति अकर्मण्य हुँदाहुँदै पनि सवैतिर संकल्प विकल्प गर्दै व्यग्र हुन्छन् तर कुशल ज्ञानी अकर्मण्य हुँदा हुँदै पनि निराकुल हुन्छन् ।

सुखमास्ते सुखं शेते सुखमायाति याति च ।
सुखं वक्ति सुखं भुंक्ते व्यवहारेऽपि शान्तधीः ॥ १८-५९॥

सुखमास्ते सुखं शेते सुखमायाति याति च ।
सुखं वक्ति सुखं भुंक्ते व्यवहारेऽपि शान्तधीः ॥ १८-५९॥

**भावार्थः** ज्ञानी व्यवहारमा पनि सुखी हुन्छ । सुखमै सुत्छ, सुखमै आउछ र जान्छ, सुखमै बोल्छ र सुखमै खान्छ ।

स्वभावाद्यस्य नैवार्तिर्लोकवद् व्यवहारिणः ।
महाह्रद इवाक्षोभ्यो गतक्लेशः सुशोभते ॥ १८-६०॥

**भावार्थः** व्यवहार गर्ने व्यक्तिलाई ज्ञानी स्वभावका कारण संसारिक दुख हुँदैन । उ त समुद्र जस्तै अक्षोभ्य र क्लेशरहित शोभायमान हुन्छ ।

निवृत्तिरपि मूढस्य प्रवृत्ति रुपजायते ।
प्रवृत्तिरपि धीरस्य निवृत्तिफलभागिनी ॥ १८-६१॥

**भावार्थः** मूर्खलाई निवृत्ति पनि प्रवृतिकै स्वरुप हुन्छ तर ज्ञानीलाई प्रवृत्ति पनि निवृत्तिकै समान हुन्छ ।

परिग्रहेषु वैराग्यं प्रायो मूढस्य दृश्यते ।
देहे विगलिताशस्य क्व रागः क्व विरागता ॥ १८-६२॥

**भावार्थः** मुर्खलाई वैराग्य पनि परिग्रह जस्तै लाग्छ तर जसका शरीरबाट आशाहरु गलिसकेका छन् त्यस्ता व्यक्तिमा राग कहाँ वैराग कहाँ ?

भावनाभावनासक्ता दृष्टिर्मूढस्य सर्वदा ।
भाव्यभावनया सा तु स्वस्थस्यादृष्टिरूपिणी ॥ १८-६३॥

**भावार्थः** मूर्खको दृष्टि सधै भावना र अभावनाबाट आसक्त हुन्छ तर स्वस्थ्यचित्त ज्ञानी भावन-अभावन गर्दा गर्दै पनि अदृष्य रुपी हुन्छन् ।

सर्वारम्भेषु निष्कामो यश्चरेद् बालवन्मुनिः ।
न लेपस्तस्य शुद्धस्य क्रियमाणेऽपि कर्मणि ॥ १८-६४॥

**भावार्थः** जुन ज्ञानी मुनि वच्चा जस्तै निष्काम भावले कार्य आरम्भ गर्छन् यस्ता शुद्ध स्वरुप कर्ममा संलप्त हुँदैनन् ।

स एव धन्य आत्मज्ञः सर्वभावेषु यः समः ।
पश्यन्शृण्वन्स्पृशन्जिघ्रन्न्अश्नन्निस्तर्षमानसः ॥ १८-६५॥

**भावार्थः** यस्ता आत्मज्ञ धन्य हुन जो सवै भावहरुमा सम हुन्छन् । उनीहरु देख्दा, सुन्दा, सुँध्दा, खाँदा पनि तृष्णाहीन मनःस्थितिमा हुन्छन् ।

क्व संसारः क्व चाभासः क्व साध्यं क्व च साधनम्।
आकाशस्येव धीरस्य निर्विकल्पस्य सर्वदा ॥ १८-६६॥

**भावार्थः** आकाश जस्तै सर्वदा निर्विकल्प धीरज्ञानीको संसार कहाँ ? आभास कहाँ ? साध्य र साधना कहाँ ?

स जयत्यर्थसंन्यासी पूर्णस्वरसविग्रहः ।
अकृत्रिमोऽनवच्छिन्ने समाधिर्यस्य वर्तते ॥ १८-६७॥

**भावार्थः** आत्मास्वरुप प्राप्त ज्ञानी, निस्वार्थ, सन्यासी र विजयी हुन्छन् । उनीहरुले पूर्ण स्वरुपमा वास्तविक भावबाट समाधि प्राप्त गर्दछन् ।

बहुनात्र किमुक्तेन ज्ञाततत्त्वो महाशयः ।
भोगमोक्षनिराकाङ्क्षी सदा सर्वत्र नीरसः ॥ १८-६८॥

**भावार्थः** यसमा धेरै भन्नु पर्ने छैन, जसलाई तत्वज्ञान छ, उ भोग, मोक्षबाट निराकांक्षी हुन्छ, सदैव राग र विरागबाट मुक्त हुन्छन् ।

महदादि जगद्द्वैतं नाममात्रविजृम्भितम्।
विहाय शुद्धबोधस्य किं कृत्यमवशिष्यते ॥ १८-६९॥

**भावार्थः** द्वैत जगतको महत्व आदि नाम मात्रले भिन्न कुरा हो, यसलाई छोडेर शुद्ध वोधरुपका लागि गर्न के अवशेष छ ?

भ्रमभूतमिदं सर्वं किंचिन्नास्तीति निश्चयी ।
अलक्ष्यस्फुरणः शुद्धः स्वभावेनैव शाम्यति ॥ १८-७०॥

**भावार्थः** यो सबै भ्रम र भ्रान्तिहरु केही पनि होइनन्, जसलाई यी कुरा निश्चय हुन्छ, ऊ अलक्ष्य, स्फूर्त, शुद्ध स्वभावको भएर शान्ति प्राप्त गर्दछ ।
शुद्धस्फुरणरूपस्य दृश्यभावमपश्यतः ।
क्व विधिः क्व च वैराग्यं क्व त्यागः क्व शमोऽपि वा ॥ १८-७१॥

**भावार्थः** शुद्धस्फूरण रुपका ज्ञानी दृष्यभाव देख्दैनन् त्यसकारण उसका लागि कहाँ विधि, कहाँ त्याग, अथवा कहाँ शान्ति ?

स्फुरतोऽनन्तरूपेण प्रकृतिं च न पश्यतः ।
क्व बन्धः क्व च वा मोक्षः क्व हर्षः क्व विषादिता ॥ १८-७२॥

**भावार्थः** अनन्तरुपी स्फूरणको प्रकृति दृष्टिगोचर हुँदैन, यस्ता ज्ञानीका लागि कहाँ बन्धन, कहाँ मोक्ष, कहाँ, हर्ष र कहाँ विषाद ?

बुद्धिपर्यन्तसंसारे मायामात्रं विवर्तते ।
निर्ममो निरहंकारो निष्कामः शोभते बुधः ॥ १८-७३॥

**भावार्थः** जुन वुद्धिमानले संसारलाई मायाले मात्र कल्पना गर्छ, यस्तो आत्मज्ञ मोहरहित, निरहङ्कारी तथा निष्कामबाट सुशोभित हुन्छन् ।

अक्षयं गतसन्तापमात्मानं पश्यतो मुनेः ।
क्व विद्या च क्व वा विश्वं क्व देहोऽहं ममेति वा ॥ १८-७४॥

**भावार्थः** अनश्वर संन्तापविहीन आत्मा स्वरुप देख्ने ज्ञानीको लागि कुन विद्या, कुन विश्व, देह अथवा कुन 'म' को अहं ?

निरोधादीनि कर्माणि जहाति जडधीर्यदि ।
मनोरथान्प्रलापांश्च कर्तुमाप्नोत्यतत्क्षणात्॥ १८-७५॥

**भावार्थः** जुन व्यक्तिले मन्दवुद्धि इच्छा निरोधको कर्म त्याग्छन् त्यसै क्षणदेखि मनोरथ र प्रलाप गर्न मै व्यस्त हुन्छन् ।

मन्दः श्रुत्वापि तद्वस्तु न जहाति विमूढताम्।
निर्विकल्पो बहिर्यत्नादन्तर्विषयलालसः ॥ १८-७६॥

**भावार्थः** मन्दबुद्धि भएको व्यक्ति आत्मतत्व सुनेर पनि मूर्खता त्याग्दैनन् । ऊ यत्नद्वारा वाह्य रुपमा निर्विकल्प हुन्छ । जवकि उसको अन्तरमन विषय लालसी नै हुन्छ ।

ज्ञानाद् गलितकर्मा यो लोकदृष्ट्यापि कर्मकृत्।
नाप्नोत्यवसरं कर्तुं वक्तुमेव न किंचन ॥ १८-७७॥

**भावार्थः** ज्ञानबाट जसका कर्महरु तिरोहित भएका छन्, ऊ लोकदृष्टिले काम गर्दा पनि केही गर्ने र केही भन्ने अवसर प्राप्त गर्दैन ।

क्व तमः क्व प्रकाशो वा हानं क्व च न किंचन ।
निर्विकारस्य धीरस्य निरातंकस्य सर्वदा ॥ १८-७८॥

**भावार्थः** सधै निर्भय र निर्विकार धीर ज्ञानीको कहाँ तम, अथवा कहाँ प्रकाश, कहाँ हानि ? उसका लागि कही केही पनि छैन् ।

क्व धैर्यं क्व विवेकित्वं क्व निरातंकतापि वा ।
अनिर्वाच्यस्वभावस्य निःस्वभावस्य योगिनः ॥ १८-७९॥

**भावार्थः** अनिर्वचनीय स्वभाव र निःस्वभाव योगीका लागि के धैर्य र कस्तो विवेक र कहाँ आतङ्क ?

न स्वर्गो नैव नरको जीवन्मुक्तिर्न चैव हि ।
बहुनात्र किमुक्तेन योगदृष्ट्या न किंचन ॥ १८-८०॥

**भावार्थः** यसमा धेरै भन्नु छैन, योगीको दृष्टिमा न स्वर्ग हुन्छ, न नरक, न मुक्ति हुन्छ । उसका लागि केही पनि हुँदैन ।

नैव प्रार्थयते लाभं नालाभेनानुशोचति ।
धीरस्य शीतलं चित्तममृतेनैव पूरितम्॥ १८-८१॥

**भावार्थः** धीरज्ञानी न लाभको प्रार्थना गर्छ, न हानिको अनुशोच गर्छ । तब त उसको चित्त अमृतबाट परिपूर्ण भै शितलता प्राप्तगर्छ ।

न शान्तं स्तौति निष्कामो न दुष्टमपि निन्दति ।
समदुःखसुखस्तृप्तः किंचित्कृत्यं न पश्यति ॥ १८-८२॥

**भावार्थः** जो निष्काम ज्ञानी हुन्छ, उसले न शान्त व्यक्तिको स्तुति गर्छ, न त दुष्टको निन्दा नै, ऊ तृप्त भएर सुख दुखलाई एक समान ठान्छ र केही गर्न योग्य हुँदैन ।

धीरो न द्वेष्टि संसारमात्मानं न दिदृक्षति ।
हर्षामर्षविनिर्मुक्तो न मृतो न च जीवति ॥ १८-८३॥

**भावार्थः** हर्ष, व्याधिबाट मुक्त ज्ञानी संसारबाट न त द्वेष गर्छ, न त उसलाई आत्मा देख्ने इच्छा नै हुन्छ । न उ मरेको हुन्छ न जीवित नै ।

निःस्नेहः पुत्रदारादौ निष्कामो विषयेषु च ।
निश्चिन्तः स्वशरीरेऽपि निराशः शोभते बुधः ॥ १८-८४॥

**भावार्थः** सन्तान र पत्निप्रति निस्नेह, विषयकाप्रति निष्काम, स्वशरीरकाप्रति निश्चित र आशारहित आत्मा बोधबाट शोभित हुन्छ ।

तुष्टिः सर्वत्र धीरस्य यथापतितवर्तिनः ।
स्वच्छन्दं चरतो देशान्यत्रस्तमितशायिनः ॥ १८-८५॥

**भावार्थः** जहाँ सूर्यास्त हुन्छ, ज्ञानी त्यहीँ सुत्छ । देश विदेशमा स्वच्छन्द विचरण गर्छ । यथाप्राप्त मै सन्तुष्ट हुन्छ । यस्तो ज्ञानी सबै हिसाबले सन्तुष्ट हुन्छ ।

पततूदेतु वा देहो नास्य चिन्ता महात्मनः ।
स्वभावभूमिविश्रान्तिविस्मृताशेषसंसृतेः ॥ १८-८६॥

**भावार्थः** देहको सुख नष्ट भए पनि स्थीर रहे पनि, स्वभावको भूमिमा विश्राम गरेर शेष संसारको विस्मृत गर्ने महात्मा चिन्ता मुक्त हुन्छन् ।

अकिंचनः कामचारो निर्द्वन्द्वश्छिन्नसंशयः ।
असक्तः सर्वभावेषु केवलो रमते बुधः ॥ १८-८७॥

**भावार्थः** अकिंचन, निष्कामी, निद्धन्द, संशयविहीन सर्वभावबाट अनाशक्त ज्ञानी एकलै रमण गर्छन् ।

निर्ममः शोभते धीरः समलोष्टाश्मकाञ्चनः ।
सुभिन्नहृदयग्रन्थिर्विनिर्धूतरजस्तमः ॥ १८-८८॥

**भावार्थः** मोहरहितका लागि माटो, पत्थर र सुन एउटै हुन्छ । जसको हृदयको ज्ञानग्रन्थी चुँडिन्छ, ऊ रज र तम गुण रहीत हुन्छ । यस्तो ज्ञानीलाई शोभा प्राप्त हुन्छ ।

सर्वत्रानवधानस्य न किंचिद् वासना हृदि ।
मुक्तात्मनो वितृप्तस्य तुलना केन जायते ॥ १८-८९॥

**भावार्थः** सर्वत्र अनाशक्तको हृदयमा केही पनि वासना हुँदैन, अत मुक्तात्मा संर्तृप्त ज्ञानीको कसैसँग पनि तुलना हुन सक्तैन ।

जानन्नपि न जानाति पश्यन्नपि न पश्यति ।
ब्रुवन्न्अपि न च ब्रूते कोऽन्यो निर्वासनादृते ॥ १८-९०॥

**भावार्थः** जसले जानेर पनि जान्दैन, देखेर पनि देख्दैन, बोलेर पनि बोल्दैन, यस्तो वासना नभएको व्यक्ति अरु कुन हुन सक्छ ?

भिक्षुर्वा भूपतिर्वापि यो निष्कामः स शोभते ।
भावेषु गलिता यस्य शोभनाशोभना मतिः ॥ १८-९१॥

**भावार्थः** जसका भावमा शोभन र असोभनको वुद्धि गलित भै सकेका छन्, यस्तो निष्काम चाहे भिक्षू हुन् चाहे राजा, शोभा प्राप्त गर्दछन् ।

क्व स्वाच्छन्द्यं क्व संकोचः क्व वा तत्त्वविनिश्चयः ।
निर्व्याजार्जवभूतस्य चरितार्थस्य योगिनः ॥ १८-९२॥

**भावार्थः** छलकपटरहित, सहजमना र सिद्ध योगीको कहाँ स्वच्छन्दता, कहाँ संकोच अथवा कहाँ तत्वका निश्चय ?

आत्मविश्रान्तितृप्तेन निराशेन गतार्तिना ।
अन्तर्यदनुभूयेत तत्कथं कस्य कथ्यते ॥ १८-९३॥

**भावार्थः** आत्माविश्रान्त, तृप्त, आशाविहीन शोकरहित, ज्ञानीका अन्तस्करणमा जुन अनुभूति हुन्छ । यो कसरी हुन्छ भनेर कसरी बताउनु ?

सुप्तोऽपि न सुषुप्तौ च स्वप्नेऽपि शयितो न च ।
जागरेऽपि न जागर्ति धीरस्तृप्तः पदे पदे ॥ १८-९४॥

**भावार्थः** प्रत्येक पदमा तृप्त धीर ज्ञानी सुतेको बेलामा पनि सुत्दैनन् । सपनामा पनि सुतेका हुँदैनन् । उनीहरु जागिरहेको बेलामा पनि जाग्दैनन् ।

ज्ञः सचिन्तोऽपि निश्चिन्तः सेन्द्रियोऽपि निरिन्द्रियः ।
सुबुद्धिरपि निर्बुद्धिः साहंकारोऽनहङ्कृतिः ॥ १८-९५॥

**भावार्थः** ज्ञानी सचिन्त्य हुँदाहुँदै पनि निश्चिन्त हुन्छन् । इन्द्रियसहित सुतिरहेको अवस्थामा पनि इन्द्रियरहित हुन्छन् । सुवुद्धि हुँदाहुँदै पनि निर्वुद्धि हुन्छन् । अहङ्कारसहित भएर पनि अहङ्काररहित हुन्छन् ।

न सुखी न च वा दुःखी न विरक्तो न संगवान्।
न मुमुक्षुर्न वा मुक्ता न किंचिन्न्न च किंचन ॥ १८-९६॥

**भावार्थः** ज्ञानी न सुखी हुन्छन् न त दुःखी । न विरत्त हुन्छ न अनाशक्त । न स्वतन्त्र हुन्छ न त मुक्त । न उ किंचन हुन्छ न त अकिंचन नै ।

विक्षेपेऽपि न विक्षिप्तः समाधौ न समाधिमान्।
जाड्येऽपि न जडो धन्यः पाण्डित्येऽपि न पण्डितः ॥ १८-९७॥

**भावार्थः** ज्ञानी विक्षेपमा पनि विक्षिप्त हुन्छ, समाधिमा पनि समाधिस्थ हुँदैन । जडतामा पनि जड् हुँदैन । पण्डितमा पनि पण्डित हुँदैन ।

मुक्तो यथास्थितिस्वस्थः कृतकर्तव्यनिर्वृतः ।
समः सर्वत्र वैतृष्ण्यान्न स्मरत्यकृतं कृतम्॥ १८-९८॥

**भावार्थः** यथार्शिस्थित स्वरुप, कृत्य, कर्तव्यबाट निवृत, सर्वत्र सम, मुक्त अतृष्णा गरेर वा नगरेर कर्मको स्मरण गर्दैनन् ।

न प्रीयते वन्द्यमानो निन्द्यमानो न कुप्यति ।
नैवोद्विजति मरणे जीवने नाभिनन्दति ॥ १८-९९॥

**भावार्थः** ज्ञानीले वंन्दना गर्दैन, कुपित पनि गर्दैन न मृत्युबाट उद्धिग्न हुन्छ न जीवनबाट हर्षित नै ।

न धावति जनाकीर्णं नारण्यं उपशान्तधीः ।
यथातथा यत्रतत्र सम एवावतिष्ठते ॥ १८-१००॥

**भावार्थः** शान्तिप्राप्त बुद्धिमान ज्ञानी जनसमूहको भाग हुँदैन न त वन जंगलतिर नै जान्छ । बरु सबैतिर समभावमा रहन्छ ।

# प्रकरण १९
# आत्मा विश्रान्ति

जनक उवाच ॥

तत्त्वविज्ञानसन्दंशमादाय हृदयोदरात्।
नाविधपरामर्शशल्योद्धारः कृतो मया ॥ १९-१॥

**भावार्थः** हजुरबाट तत्व ज्ञान लिएर मैले हृदय र मनमा रहेका नाना प्रकारका परामर्शका शुलीहरुको (विकारहरुको ) उद्धार गरे ।

क्व धर्मः क्व च वा कामः क्व चार्थः क्व विवेकिता ।
क्व द्वैतं क्व च वाऽद्वैतं स्वमहिम्नि स्थितस्य मे ॥ १९-२॥

**भावार्थः** स्वमहिमा स्थित भएर मलाई कहाँ धर्म, कहाँ काम र कहाँ अर्थ, कहाँ द्वैत र कहाँ अद्वैत ?

क्व भूतं क्व भविष्यद् वा वर्तमानमपि क्व वा ।
क्व देशः क्व च वा नित्यं स्वमहिम्नि स्थितस्य मे ॥ १९-३॥

**भावार्थः** स्वमहिमामा स्थित भएर मलाई कहाँ आत्मा कहाँ अनात्मा ? कहाँ शुभ कहाँ अशुभ ? चिन्ता कहाँ अचिन्ता कहाँ ?

क्व चात्मा क्व च वानात्मा क्व शुभं क्वाशुभं यथा ।
क्व चिन्ता क्व च वाचिन्ता स्वमहिम्नि स्थितस्य मे ॥ १९-४॥

**भावार्थः** नित्य स्वमहिमामा स्थित भएर मलाई कहाँ भूत, कहाँ भविष्य वा वर्तमान अथवा देश पनि कहाँ हो जस्तो भयो ।

क्व स्वप्नः क्व सुषुप्तिर्वा क्व च जागरणं तथा ।
क्व तुरीयं भयं वापि स्वमहिम्नि स्थितस्य मे ॥ १९-५॥

**भावार्थः** स्वमहिमामा स्थित भएर मलाई कहाँ सपना हो कहाँ निन्द्रा र कहाँ जागरण ? कहाँ तुरीय र कहाँ भय ?

क्व दूरं क्व समीपं वा बाह्यं क्वाभ्यन्तरं क्व वा ।
क्व स्थूलं क्व च वा सूक्ष्मं स्वमहिम्नि स्थितस्य मे ॥ १९-६॥

**भावार्थः** स्वमहिमामा स्थित भएर मलाई कहाँ टाढा, कहाँ नजिक, कहाँ बाह्य कहाँ आंन्तरिकता ? कहाँ स्थूल त कहाँ सुक्ष्मता ।

क्व मृत्युर्जीवितं वा क्व लोकाः क्वास्य क्व लौकिकम्।
क्व लयः क्व समाधिर्वा स्वमहिम्नि स्थितस्य मे ॥ १९-७॥

**भावार्थः** स्वमहिमामा स्थित भएर मलाई मृत्यु कहाँ जीवन कहाँ ? लोक कहाँ वा लौकिक कहाँ ? कहाँ लय अथवा कहाँ समाधि ?

अलं त्रिवर्गकथया योगस्य कथयाप्यलम्।
अलं विज्ञानकथया विश्रान्तस्य ममात्मनि ॥ १९-८॥

**भावार्थः** त्रिवर्ग अथवा धर्म, अर्थ, काम संसारीका लागि गरिएको हो । त्यही योग र ज्ञानको पनि चिन्तन हो ।

# प्रकरण २०
# जीवमुक्ति

जनक उवाच ॥

क्व भूतानि क्व देहो वा क्वेन्द्रियाणि क्व वा मनः ।
क्व शून्यं क्व च नैराश्यं मत्स्वरूपे निरंजने ॥ २०-१॥

**भावार्थः** मेरो निरन्जन स्वरुपमा कहाँ पञ्चभूत, कहाँ देह, अथवा कहाँ इन्द्रिय र कहाँ मन ? कहाँ शुन्य र कहाँ नैराश्य ?

क्व शास्त्रं क्वात्मविज्ञानं क्व वा निर्विषयं मनः ।
क्व तृप्तिः क्व वितृष्णात्वं गतद्वन्द्वस्य मे सदा ॥ २०-२॥

**भावार्थः** म सधै द्वन्द मुक्तको कहाँ शास्त्र र कहाँ आत्मज्ञान ? कहाँ विषयहीन मन र कहाँ तृप्ति तथा वितृष्णा ?

क्व विद्या क्व च वाविद्या क्वाहं क्वेदं मम क्व वा ।
क्व बन्ध क्व च वा मोक्षः स्वरूपस्य क्व रूपिता ॥ २०-३॥

**भावार्थः** मेरो लागि के विद्या र के अविद्या ? म के र उ के ? मेरो के बन्धन र के मोक्ष ? के स्वरुप र के रुप ?

क्व प्रारब्धानि कर्माणि जीवन्मुक्तिरपि क्व वा ।
क्व तद् विदेहकैवल्यं निर्विशेषस्य सर्वदा ॥ २०-४॥

**भावार्थः** धर्म अधर्म, कृत अकृत, जसका लागि केही पनि शेष छैन । यस्ता महाशयका लागि कहाँ प्रारब्ध कर्म, कहाँ जीवन मुक्ति ।

क्व कर्ता क्व च वा भोक्ता निष्क्रियं स्फुरणं क्व वा ।

क्वापरोक्षं फलं वा क्व निःस्वभावस्य मे सदा ॥ २०-५॥

**भावार्थः** म स्वभावरहितमा कहाँ कर्तापन र कहाँ भावतापन, कहाँ निष्क्रियता, कहाँ सक्रियता र कहाँ प्रत्यक्ष ज्ञानपन, कहाँ निष्क्रियता, कहाँ सक्रियता र कहाँ प्रत्यक्षज्ञान?

क्व लोकं क्व मुमुक्षुर्वा क्व योगी ज्ञानवान्क्व वा ।
क्व बद्धः क्व च वा मुक्तः स्वस्वरूपेऽहमद्वये ॥ २०-६॥

**भावार्थः** म अद्वैत रुपको कहाँ लोक र कहाँ स्वतन्त्रता ? अथवा कहाँ योगी र कहाँ ज्ञानवान ? अथवा कहाँ बद्ध र कहाँ मुक्ति?

क्व सृष्टिः क्व च संहारः क्व साध्यं क्व च साधनम्।
क्व साधकः क्व सिद्धिर्वा स्वस्वरूपेऽहमद्वये ॥ २०-७॥

**भावार्थः** म अद्वैतरुपको सृष्टि कहाँ र संहार कहाँ ?
साध्य र साधन कहाँ ? साधक र सिद्धि कहाँ ?

क्व प्रमाता प्रमाणं वा क्व प्रमेयं क्व च प्रमा ।
क्व किंचित्क्व न किंचिद् वा सर्वदा विमलस्य मे ॥ २०-८॥

**भावार्थः** म सर्वदा विमलको कहाँ प्रमाता र कहाँ प्रमाण, कहाँ प्रमेय अथवा कहाँ प्रभा ? कहाँ किंचित र कहाँ अकिंचित ?

क्व विक्षेपः क्व चैकाग्र्यं क्व निर्बोधः क्व मूढता ।
क्व हर्षः क्व विषादो वा सर्वदा निष्क्रियस्य मे ॥ २०-९॥

**भावार्थः** म सर्वदा निष्क्रियको कहाँ विक्षेप र कहाँ एकाग्रहता ? कहाँ निर्वोध र कहाँ मूढता ? कहाँ हर्ष र कहाँ विषाद ?

क्व चैष व्यवहारो वा क्व च सा परमार्थता ।
क्व सुखं क्व च वा दुखं निर्विमर्शस्य मे सदा ॥ २०-१०॥

**भावार्थः** सधै म दोषरहित स्वरुपको कहाँ व्यवहार र कहाँ परमार्थ ? कहाँ सुख र कहाँ दुख ?

क्व माया क्व च संसारः क्व प्रीतिर्विरतिः क्व वा ।
क्व जीवः क्व च तद्ब्रह्म सर्वदा विमलस्य मे ॥ २०-११॥

**भावार्थः** म सदैव विमल स्वरुपको कहाँ माया र कहाँ संसार ? कहाँ प्रीत र कहा विरति ? कहाँ जीव र कहाँ ब्रह्म ?

क्व प्रवृत्तिर्निर्वृत्तिर्वा क्व मुक्तिः क्व च बन्धनम्।
कूटस्थनिर्विभागस्य स्वस्थस्य मम सर्वदा ॥ २०-१२॥

**भावार्थः** सदा कुटस्थ र निर्विभाग म स्वस्थ्यको कहाँ प्रवृत्ति र कहाँ निवृत्ति ? कहाँ मुक्ति र कहाँ बन्धन ?

क्वोपदेशः क्व वा शास्त्रं क्व शिष्यः क्व च वा गुरुः ।
क्व चास्ति पुरुषार्थो वा निरुपाधेः शिवस्य मे ॥ २०-१३॥

**भावार्थः** उपाधिसून्य म निरन्जन स्वरुपको कहाँ उपदेश र कहाँ ज्ञान ? कहाँ शिष्य? कहाँ गुरु ? कहाँ पुरुषार्थ ?

क्व चास्ति क्व च वा नास्ति क्वास्ति चैकं क्व च द्वयम्।
बहुनात्र किमुक्तेन किंचिन्नोत्तिष्ठते मम ॥ २०-१४॥

**भावार्थः** मेरो लागि कहाँ हुनु, कहाँ नहुनु, कहाँ एक र कहाँ द्वय ? यो विषयमा धेरै भन्नुको कुनै प्रयोजन छैन । मलाई केहीले पनि उत्तिर्ढित गर्दैन ।

॥ ॐ तत्सत्॥

# सन्दर्भसूचि

सरस्वती, रामानन्द (मिति नखुलेको). अष्टाबक्र गीता। मनोज पकेट बुक्स । दिल्ली ।

शंकर, रवि (मिति नखुलेको). अष्टाबक्र गीता । श्री श्री रवि शंकर ट्रष्ट, भारत ।

जालिमसिंह, रायबहादुर ( मिति नखुलेको ). अष्टाबक्र गीता । तेज कुमार प्रेस । लखनऊ
https://archive.org/details/HindiBookAshtavakraGitaRamanandaSaraswati

Rihards, John (nd.) Ashtavakra Gita:The Song of Ashtavakra. http://realization.org/p/ashtavakra-gita/richards.ashtavakra-gita/richards.ashtavakra-gita.html

Richards, John (nd). Ashtavakra Gita. Sanskrit text with English Transliteration & Translation. cleaves.zapto.org/news/attachments/.../ashtavakra_gita__sanskrit_with_english.pdf

Marshall, B.(2005). Ashtavakra Gita. http://www.holybooks.com/ashtavakra-gita/

Puri, Santananda (2001). Quantum leap into the absulate, essence of Astabavakra-Gita. Parvathamma C.P. Subbaraju Setty Charitable Trust 13/8, PMK Road, Bangalore

Osho (1976). Mahageeta, Vol 1. Talks given from 11/09/76 - 20/09/76 Original in Hindi.

The Essence of the Ashtavakra Gita. Zen Publications, Mumbai http://www.exoticindiaart.com/book/details/essence-of-ashtavakra-gita-NAC744/

Chinmayananda (2016). Astavakra Gita, song of self realisation. Central Chinmaya Mission Trust

Nityaswarupananda (2013). Astavakra Samhita. Advaita Ashrama http://www.exoticindiaart.com/book/details/astavakra-ashtavakra-samhita-IDJ313/